## हंसध्वज र सूर्यकेतु राजाको युद्ध तथा सूर्यकेतुको हार भई शिवपुरी पर्वतमा वास

श्वेतकापुरी नाम नगरीमा सूर्यकेतु राजा थिया । मिथिलाका अधिपति हंसध्वज नाम राजा बलवान् पराक्रमी थिया र सूर्यकेतुसँग युद्ध गरी श्वेतकापुरीबाट निकाल्यापछि दु:खित भै बसिरह्याका थिया । एकदिन नारदसँग भेट् भयो र उनीसँग अब मैले कुन स्थानमा बस्न्या हो भनी आफ्नू दु:ख सबै बिन्ति गर्दा नारद आज्ञा गर्दछन् । हे नृप सुन. मृगेन्द्रशिखर नाम शिवपुरी पर्वत 'जहाँबाट वाग्मती प्रकट भयाकी छन्' त्यहीं जाई वास गर । पछि श्रीकृष्णका अनुग्रह पाई फेरि आफ्नू राज्य हात लाग्न्याछ सन्देह नगर । उद्धार होला भन्न्या नारददेखि उपदेश पाई पुत्री चन्द्रावती भार्या सहित वाग्मती प्रक भयाका पर्वतमा जाइ वास गर्दाभया ।

## महेन्द्रदमनकी बहिनी प्रभावतीलाई पार्वतीबाट वरप्रदान

केही दिनपछि शुक्रका उपदेशले रुद्रधारोदय तीर्थमा बसी बाणपुत्र महेन्द्रदमन नाम दैत्य र शङ्खासुर दैत्यले महादेवको आराधना गरी तपस्या गर्दा वर प्रसाद पाई इन्द्रसँग स्वर्गमा जाई शङ्खासुर कच्छपासुर दुर्धर्ष भाई प्रभृति सैन्यसहित जाई महासंग्राम गरी रणभूमिमा इन्द्रकन जिती धपाउँदा इन्द्रकन दमन गऱ्या भन्नानिमित्त महेन्द्रदमन भनी नाम प्रख्यात हुन गयो । देवताकन जिती अमरावती-विषे प्रवेश गर्दा त्यसै क्षणमा पितामह ब्रह्मा शक्रपुरीमा आई आज्ञा गर्दाभया । हे महेन्द्रदमन मेरा वचन मान वथा भन्न्या तिमी यहाँ नबस ।सुप्रभामा जाई बस । त्रैलोक्यका रत्नादि वीर भोग पुऱ्याइ-दिउँला भनी अनेक प्रकारसँग बुझाउँदा महेन्द्रदमन बुझी नेपालका सुप्रभा नाम नगरी अति रमणीय स्थानमा दानवहरूले सहित भै गै वास गऱ्या । ब्रह्माका अनुग्रहले इन्द्रलाई बोलाई आज्ञा गऱ्या । महेन्द्रदमन दैत्यलाई कृष्णका पुत्र प्रद्युम्नले मार्न्याछन् । अर्काको हस्तले त्यसको मरण छैन भनी आज्ञा गर्दा इन्द्र मनमा वैराग्य मानी अमरावतीमाप्रवेश गर्दाभया । बाणासुर दैत्यका पुत्र महेन्द्र-दमनका बहिनी प्रभावती नाम कन्याकी अति सुन्दरी थिइन् । पूर्वकालमा उत्तरापथविषे महादेवले तपस्या गरिरहँदाका समयमा कामदेव जाई पुष्पवाण प्रहार गरी महादेवकन समाधिदेखि जागर्त गराउँदा महादेवका नेत्रले दृष्टि हुँदा कामदेव भस्म भै गऱ्या र रतिदेवीले आफना पुरुष भस्म भयाका देखी महादेवसित बहुतै प्रकारसँग रोई बिन्ति गर्दा कृपानिधिबाट द्वापरान्त युगमा तिमीहरूको फेरि विवाह होला भनी आज्ञा प्रसन्न भयाको थियो । रति महेन्द्रदमनकी बहिनी भै रह्याकी थिइन् । तिनले वत्सलादेवीका सेवा गऱ्या र पार्वतीदेवी प्रसन्न भै रह्याकी थिइन् र वरदान दिँदिभइन् ।

हे प्रभावती तेरा वाञ्छा पूर्ण हुन्याछ । तेरो चित्तमा रह्याको मैले थाहा पायाँ । कृष्णका पुत्र प्रद्युम्न निश्चयले तेरा पुरुष हुन्याछन् भनी अन्तर्ध्यान हुँदिभइन् । प्रभावती यति वर प्रसाद पाई चन्दनागिरिका माथि सुप्रभापुरीमा गइन् । त्यहाँपछि मृगेन्द्र शिखरबाट प्रकट भयाकी वाग्मतीकन थुनी नेपाल क्षेत्रका श्लेमान्तकवनकन ह्रद गरी नाना कमल कुमुद उत्पल उत्पन्न गराई ठूलो तलाउ बनाई सुप्रभा नदीमा परम दुर्जय दानव महेन्द्रदमन बस्याको देखेर सूर्यकेतु राजाले आफूसँगका रस्तादिहरू दी मानो खुशी गराई निर्भयसँग बस्याका थिया ।

## सूर्यकेतु राजा नारदको भरोसाद्वारा आफ्नी पुत्री महेन्द्रदमनलाई दिन बेमञ्जूर

एकदिन महेन्द्रदमनका सेवक मृगेन्द्रशिखरमा जाँदा सूर्यकेतुका पुत्री अति सुन्दरी चन्द्रावतीकन देखी चाँडै आई महेन्द्रदमनकन कह्यो । हे दानवेन्द्र आज मैंले स्त्रीरत्नमध्ये गनियाकी अति-सुन्दरी सूर्यकेतुका पुत्रीकन देख्याँ । हजूरकी योग्यकी छन् । यस पृथ्वीमा अरुका योग्यकी छैनन् भनी बिन्ति गर्दा महेन्द्रदमनले दूतकन अह्राई चन्द्रावतीकन माग्न पठाया । त्यो दूत जाई सूर्यकेतु राजासँग बाणका पुत्र महेन्द्रदमन नाम राजा शम्भुका प्रसादले सम्पूर्ण भाग्य भोग्यले युक्त भयाकाले तिम्री पुत्री माग्न पठाया, भन्दा सूर्यकेतु मनमा डराई विचार गरी भन्दछन् महेन्द्रदमन राजा त्रैलोक्यका अधिपति हुन् । तिनले जति मेरी पुत्री माग्न पठाया त मँ जस्ताको धन्य को होला । चन्द्रावती सुन्दरी मेरी पुत्रीका विवाहका समयमा क्या भाग्य छ सो होला । उनको आज्ञा लंघन गर्न सक्न्या म होइन । क्या होला भन्दा दूत खुशी भै फर्की महेन्द्रदमनसँग बिन्ति गर्न गयो ।

त्यहाँपछि सूर्यकेतु राजा दुःखित भै मनमा चिन्तना गर्न लाग्या । कष्टमाथि कष्ट आइलाग्यो । अब मैले कसो गर्न्या हो । शत्रुले निकाल्दा श्वेतकापुरी त्यागी यहाँ बसिरह्याछु यहाँ बसीकन पनि पुत्री दी दैत्यलाई मान्नुपर्‍यो । मृगेन्द्रशिखरमा पनि मलाई बास भएन । भनी चिन्तना गर्न लागिरह्याका थिया । उस्तै बीचमा नारद मुनि आइपुग्या र पूजा मान्य गरी बिन्ति गर्‍या । महेन्द्रदमन दैत्यले मेरी पुत्री माग्न पठायो । कस्ता तरहसँग मैले यो कुरो थाम्नु, हे मुनि यसमा केहीं उपकार गरिदिनुहवस् भनी बिन्ति गर्दा नारद मुनि आज्ञा गर्दछन् । हे सूर्यकेतु तिमी शंका नगर । चन्द्रावती तिम्री पुत्री प्रद्युम्नलाई दिउँला । म द्वारिकामा जाई कृष्णसँग बिन्ति गरुँला । भय मान्नुपर्दैन भनी भरोसा दी आकाशमार्गले गरी जाँदा चन्दागिरिको माथि पुग्दा दैत्यकन्या प्रभावतीकन देख्या र उहाँ गया । प्रभावतीले नारदकन देखी क्या कारणले यहाँ आउनुभयो भनी बिन्ति गर्दा हे

सुन्दरी तिमीले आंच "प्रद्युम्न पुरुष पाउन्या छयौ" भन्न्या वर पायाकी छौ । अफसम्म भयाको छैन । कृष्णका पुत्रकन सूर्यकेतु राजाकी पुत्री परम सुन्दरी छन् । प्रद्युम्नलाई दिन भनी कबलित गऱ्याको छ । द्वारिकाबाट प्रद्युम्न आउन्याछन् । उसै बखतमा प्रद्युम्नसँग तिम्रो पनि विवाह होला भन्दा प्रभावती भन्न लागिन् । हे सर्वज्ञ तिमीछेउ (थाहैहोला ।) संखासुर कच्छपासुरले बाग्मतीद्वार बन्द गरिरह्याका छन् । दाज्यू मेरो बडो सामर्थी छन् । यहाँ प्रद्युम्न कस्ता तरहले आउलान् भन्दा फेरि नारद भन्दछन् । जुन कुरो तिमीले भन्यौ, सो कुराको शंका नगर । सल्लते गरी पुग्न्याछ । तिमी सुप्रभामा जाऊ । त्यसै स्थानमा बगिरह्या तिम्रा दाज्यूको भय छैन भनी नारद द्वारिकामा जाँदाभया ।

## द्वारिकामा पुगी प्रद्युम्नलाई लिई नारदको पुनरागमन

जब कृष्णका सभामा पुग्याथ्या । नारद आयाको देखी श्रेष्ठाचार गरी मानी श्रीकृष्ण आज्ञा गर्दछन् । क्या कारणले आउनुभयो भनी आज्ञा हुँदा नारद बिन्ति गर्दछन् । हे गोविन्द हंसध्वजका भयले सूर्यकेतु नाम राजा श्वेतकापुरी त्याग गरी मृगेन्द्रशिखरमा गै बस्याका छन् । तिनकी पुत्री चन्द्रावती प्रद्युम्नलाई कल्पित गऱ्याका छन् । महेन्द्रदमनका बहिनी प्रभावतीलाई पनि प्रद्युम्न पुरुष पाउली भनी पार्वतीबाट वर प्रसाद बक्स्याको छ । तिम्रा पुत्रले महेन्द्रदमनलाई मार्न सक्न्याछन् । यसमा विचार गर्नुपर्दैन भनी भन्दा श्रीकृष्ण आज्ञा गर्दछन् । केही गरी दुर्जय दैत्यलाई प्रद्युम्नले मार्न नसक्या कस्ता तरहले विवाह होला म भयादेखि वध होला कि भनी सोध्नुहुँदा मुनि भन्दछन् । महेन्द्रदमनको तिम्रा हातले वध छैन । प्रद्युम्नका हातबाट मात्रै वध हुन्या छ । यो कुरा ब्रह्मादेखि मैले सुन्याको छु भनी महेन्द्रदमनले इन्द्रलाई जय गऱ्याको ब्रह्माबाट आज्ञा भयाको सब विस्तार कही आज म र प्रद्युम्न सुप्रभामा जान्छौं । भोली प्रातकालमा आफू आउनुहोला भनी बिन्ति गरी प्रद्युम्न नारद मुनि गरुडमा सवार भै चांडै चन्दनशैलमा प्राप्त हुँदाभया ।

## प्रभावती र नारदको वार्तालाप

जहाँ प्रभावती नाना कुसुम नाना वृक्षले शोभायमान भै रह्याका विचित्र मण्डपमा सुतिरह्याकी थिइन् । चन्द्रमाकन आकाशमा देख्या जस्तो प्रद्युम्नसँगको प्रीतिको अभिलाषले कामवाणले पीडा भयाकी ती प्रभावती जागी नानातरहसँग चिन्तना गरिरह्याकी थिइन् । त्यस्तै समयमा आकाशमार्गले गरी प्रद्युम्नले सहित मुनि आया । वीणा हातमा ली आयाका देखी उठी प्रणाम गरिन् । प्रभावतीकन नारदमुनि भन्दछन् । मैले तिमीलाई पति श्रीकृष्णका

पुत्र ली आइपुग्यौं । गिरिजाका वर प्रसादले पायौ । अब नबस । सौन्दर्यगृहमा हिड़ । गान्धर्वविवाह गरौली । तिम्रो मनोरथ पुग्न्याछ । यति वचन मुनिको सुनी प्रभावती हात जोडी बिन्ति गर्छिन् । हे मुनि मेरा इच्छा तिमीलाई थाहै छ । महेन्द्रदमन मेरा दाज्यू बडा बलवान् छन् । इन्द्रकन पनि जित्न सक्न्या सुकुमाराङ्ग भर्खर यौवन प्राप्त भयाका मेरा दाज्यूले यो कुरा सुन्यापछि कस्ता तरहसँग सास्ती होला भन्दा मुनि भन्दछन् । तिमी सन्देह नमान । तिम्रा दाज्यूको भय नमान । दुर्जय दानव काल सम्बरलाई पनि मार्न्या यिनले महेन्द्रदमनलाई पनि मार्न्याछन् । भोलो ठूलो युद्ध हुन्याछ । तिम्रा श्वशुरा हुन्या गरुडासन श्रीकृष्ण प्रद्युम्नका सहायनिमित्त आउन्याछन् । उहाँपछि दुर्जय दानवहरूलाई मारी चन्द्रावतीको पनि विवाह होला । तिमी पनि द्वारिकापुरी जाई पतिका सँग देवताकन पनि दुर्लभ भयाको नानाविध भोग गरौली । यति नारदमुनिका वचन सुनी फेरि प्रभावती भन्दछिन् । पतिका कारणले मेरा दाज्यूलाई यहीँ मारुँला त म मात्रै जिई सुख पाई क्या हुन्छ । प्रद्युम्न पतिमध्ये उत्तम हुन् । यस कार्यले मलाइ अकीर्ति लोकमा हुन्याछ । प्रभावतीले पुरुषका कारण दाज्यूको वध गराइन् भन्न्या अपवाद लाग्न्याछ । यो कुरो म इच्छा गर्दिन भनिन् । यति वचन सुनी नारद आज्ञा गर्दछन् । यस कुरामा विषाद नगर । देवीबाट वर पायाकी छौ । पितृकुलभन्दा पुरुषका कुलमा वर स्त्रीहरू प्रीति राख्दछन् भवितव्य हुन्या कुरा होइजान्छन् । अरू कुरा प्रयास गर्नु मात्र छ । यस प्रकारले सोँचना नगर । प्रद्युम्न पति पाउन्या पदवी तिम्रो छ । महेन्द्रदमन दैत्यलाई अवश्य यिनले मार्न्याछन् । यति बुझी तिमीले विषाद छोड । म मृगेन्द्रशिखरमा जान्छु । प्रातकालमा आउँला भनी सूर्यकेतु राजा बस्याका ठाउमा जाँदाभया ।

## प्रद्युम्न र प्रभावतीको वार्तालाप

मुनि गयापछि प्रद्युम्नकन आफ्ना बिछ्याउनामा बोलाई राख्या । त्यहाँपछि प्रभावती लज्जा मानी केही बोलिनन् र वरमध्ये उत्तम भयाका प्रद्युम्नले तिम्रा रूपको वर्णन नारदको मुखबाट सुन्यादेखि मलाई निन्द्रा पर्न्याको छैन । तिमीमाथि मेरा चित्त रहन गयो भनी परस्पर नाना सम्वाद गरी अति प्रीति वृद्धि हुन जाँदा फूलका माला लो प्रदक्षिणा गरी पुरुषकन वरा गान्धर्व विवाह भयापछि प्रभावतीकन कामना राखी नाना तरहका शृङ्गारलीला प्रीति वृद्धि हुन्या कुरो परमानन्दसित बिहार गर्दाभया । जब चन्द्रमा अस्त भया । नारदमुनि आइपुग्या र प्रद्युम्न भन्छन् । कस्ता तरहसँग दुर्जय भयाका दानवहरूकन जय गर्न्या हो. भनी सोध्दा नारद भन्छन् । लोकपालादिले रक्षा गरिराख्याका तिनै लोककन जित्न्या हुन् त पनि मैले ब्रह्माको मुखबाट सुन्याको छु । तिम्रै हातबाट उसको मरण छ । उनको

बचन विपरीत हुन्याछैन भन्दा प्रद्युम्न युद्ध गर्न इङ्गीकार गर्दाभया । प्रभावती देवीले पनि पुरुषका जयनिमित्त मङ्गलचित्त गर्दिभइन् ।

## प्रद्युम्न र महेन्द्रदमनको युद्ध

त्यहाँपछि तिम्रा पिता भगवान् श्रीकृष्ण पनि शङ्ख चक्र गदा पद्मधारि गरुडमा सवार भै इन्द्रादि देवतागणले सहित भै आउन्याछन् । शङ्खासुर नाम अति गम्भीर स्वर भयाका सेतु रक्षा गरिरहन्या देवकण्टक भयाको यस्तो दानवकन मारी इन्द्रादि देवताको मनोरथ पुऱ्याऊ भन्न्या नारदका वाक्य सुनी रुक्मिणीका पुत्र शङ्खालयमा गया । उहाँ द्वार थुनिरहन्यालाई लात माऱ्या र शङ्खासुर निस्की कसका आज्ञाले इन्द्रादि देवतालाई पनि अगम्य भयाको सेतुरक्षा गर्न्या ममाथि क्या जानी आइथिस् भनी क्रोध गरी जाइलाग्दा बाहुयुद्ध भयो । परन्तु शङ्खासुरलाई भूमिमा पछारी उदरमाथि टेकी कुल्ची मार्दा पीड़ा दिंदा करायाको शब्द सुनी जलभित्र रह्याका कच्छपासुरले थाहा पाई निस्की पर्वताकार देह धरी शस्त्रादि ली गर्जमान गर्दा सैन्यहरू पनि थोरबहुत नाना शस्त्र अस्त्र ली जम्मा भया ! सुप्रभाका सैन्य पनि आया । कच्छपासुर बहुतै क्रोध गरी द्वारमा बस्यो महेन्द्रदमन पनि बहुतै रिसाई आयो । प्रद्युम्न पनि रथमा चढ़्दाभया । महेन्द्रदमन आयाको देखी प्रद्युम्नले युद्धको इच्छा गर्दा महेन्द्रदम न रसाई भन्यो कि कसका आज्ञाले तैं ले मेरा कच्छपमाथि चलन आइस् कसको छोरो होस् भन् भन्दा प्रद्युम्नले मधुर वाक्य गरी भन्न लाग्या । शङ्खासुरलाई मारी जलमा बस्याको कच्छपलाई पनि मार्नाको इच्छा गर्न्या म हुँ । मेरो नाम प्रद्युम्न हो । म श्रीकृष्णको पुत्र हुं । तिमीहरूकन संहार गरी देवेन्द्रकन शुभ गराउने इच्छाले आयाको हुँ भन्दा यति वचन सुनी महेन्द्रदमन रिसाई लाल नेत्र गरी भन्न लाग्यो । यदि केशवपुत्र तँ होस् त मेरा हातमा परिस् । कहाँ जालास् धेरै वर्ष भयो । तँलाई धाई धाई रह्याको आज भेट् भयो । तँलाई रक्तको धारा बहाई रणभूमिमा नगिराई छाड्न्याछैन । सम्बरलाई माऱ्यादेखिको रिस शान्ति भयाको छैन भन्न्या ती वचन सुनी फेरि प्रद्युम्न भन्दछन् । इन्द्रादि देवताका कण्टक तँलाई मारी चन्द्रावतीको विवाह निर्विघ्नसित गरुंला भनी युद्ध गर्न तयार हुंदाभया । उस्तै बखतमा श्रीकृष्ण शंख चक्र गदा पद्मधारि इन्द्रादि अमरावती गणले युक्त गरी गरुडमा सवार भै आइपुग्दाभया । इन्द्रादि देवताहरूले बहुतै खुशी भै प्रद्युम्नकन मान्य गऱ्या । महेन्द्रदमनले प्रद्युम्नको सहाय आई जम्मा भयाको देखी बहुतै क्रोध गरी नाना तरहका उग्र उग्र शस्त्रले प्रद्युम्नकन प्रहार गऱ्या । प्रद्युम्नले पनि उसको शस्त्र सब व्यर्थ गरिदिया । परस्पर महायुद्ध भयो । दुवै पक्षका धेरै सैन्य संहार भया । महेन्द्रदमनले आफ्ना सैन्य धेरै संहार भयाको देखी बहुतै रिसाई प्रद्युम्नकन नाश गरुं भनी नाना शस्त्रले प्रहार गऱ्यो । कस्तो शस्त्र भन्या विषाग्नि छाद्न्या, अति अघोर नागास्त्रको वेदना सहन नसकी प्रद्युम्न

मूर्छा हुंदा भया। तत्क्षणमा गरुड जाई पखेटाले हाँकी शीतल गराई नागास्त्रका प्रहार निवारण गरिदिया। जरा उखेल्याका वृक्ष ढल्दा झैं पृथ्वीमा लोट्याका प्रद्युम्नकन देखी नारदमुनि प्रद्युम्नकन आई भन्न लाग्या। महेन्द्रदमनलाई मार्न उपाय सुन,

## प्रद्युम्नद्वारा महेन्द्रदमनको वध तथा श्रीकृष्णले वाग्मतीको निकासा खोलेको

पूर्वकालमा ब्रह्माले(वर) बक्स्याको छ। शस्त्र अस्त्रका प्रहारले कतै युद्ध गर्‍या पनि यसको मरण छैन। तसर्थ वेगसित जाई शिरमा मुष्टिले प्रहार गर भनी उपदेश दिंदा प्रद्युम्नले नारदको वाक्य सुनी आफ्नू सब बल प्रकाश गरी वेगसित जाई वज्रसमान मुष्टिले शिरमा प्रहार गर्दा महेन्द्रदमन नाम भयाको इन्द्रको परम शत्रु भयाको दानव वेदना सहन नसकी पृथ्वीमा लोटी मर्‍या। सर्वाङ्ग रक्त भयो। त्यहांपछि सुप्रभाको शेष रह्याका दैत्यहरू महेन्द्रदमनलाई मार्‍याको देखी प्रद्युम्नका भयले पातालमा भागी गया। त्यहांपछि इन्द्रादि देवताहरू अत्यन्त हर्षमान भै पुष्प वृष्टि गरी जय शब्द गरी दुन्दुभि आदि वाद्य बजाई नाना मंगल गर्दाभया। महादुर्जय दैत्यलाई वध गरो जय शब्द गर्‍याको सुनी वाग्मती देवी नारीरूप धरी श्रीकृष्णका संमुख आई स्तुति गर्दिभइन्। हे ऋषिकेशव सब सामर्थले युक्त भयाका, सेतुबन्ध खोलिबक्सनुहवस् गंगा देख्नाकन बहुतै इच्छा मेरो भैरह्याको छ। हजुरका प्रसादले यो होइसक्छ भनी विन्ति गरिन्। वाग्मतीको वचन सुनी खुशी भै सेतु चक्रले छेदन गरी मार्ग बनाइदिंदाभया। सेतुबन्धन खोलिदियाको देखी कच्छपासुर बहुतै रिसाई बायाँ हातले दोलाचल पर्वत दाहिना हातले श्वर्णश्रृङ्ग पर्वत उठाई फेरि सेतुबन्धन गर्न इच्छा गरी शैल दुइ उठाईकन जाई हल्लाउँदा श्रीकृष्णबाट देखी बितौल पर्न लाग्यो भनी मनवेगले गरी जाई दोलाचलमा कीलेश्वर श्रृङ्गमा श्वर्णेश्वर स्थापना गरी यी दुइ श्रृङ्ग अचल गरिदिंदा कच्छपासुरको जोर लागेन।

## प्रद्युम्नद्वारा कच्छपासुरको वध

चैत्रकृष्ण चतुर्दशीका दिन कीलेश्वरकन जसले भक्तियुक्त पूजा गर्ला। त्यसलाई कैलाशवास होला। शिवरात्रीका चतुर्दशीका दिन स्वर्णेश्वरकन भक्तियुक्त दीपमाला बाली मान्य गर्‍या त्यसलाई भय निवारण होला। जौन इच्छाले गरी भक्ति गर्ला। स्वरवकामना पूर्ण होला। कच्छपासुरले श्रृङ्ग उठाउन नसकी अति क्रोध गरी जाई प्रद्युम्नसंग बाहुयुद्ध गर्‍यो। महायुद्ध भयो। तैपनि मार्न नसक्दा तत् स्थानमा चाँडै नारद जाई भन्न लाग्या। यस दुरात्माकन उत्तानो पारी यसको उदरमा रह्याका रक्त भिक भन्या

बोल्दाभया । धन्य महाभाग हामीहरूको तप गऱ्याको फल आज पुग्यो । एकै स्थानमा हरि हर प्रभुको दर्शन पाइयो । हामीहरू धन्य रहयाछौं भनी कृतार्थ भै चर्मचक्षु भयाका हामीहरूले साक्षात् हरि हर प्रभु पुराण पुरुष दुवैकन जांन्यौ । जुन हरि सो हर जो हर सो हरि हुन् । जसले यस्ता तरहसंग दर्शन पाउला । वैष्णव शैव दुवैकन हरि हरको जो भेदभाव गर्दछन् । ती अधम पाखण्डी वेददेखि बाहिरका हुन् । जस्तै गंगा र गौरीको भेद छैन । त्यस्तै शंकर र श्रीकृष्णको भेद छैन यस्ता तरहसँग जो दर्शन पाउँछ सो धन्य भन्नु कृता ँ पनि होइजान्छ । यसमा सन्देह छैन । यति नेमुनिका वचन सुनी श्रीपशुपतिनाथ प्रकट भै हरि हर दुवै विराजमान हुंदाभया । श्रीपशुपतिनाथ श्रीकृष्णका मुखकन मुनि गणमा श्रेष्ठमा श्रेष्ठ भयाका नेमुनिकन देखी प्रसन्न भै आज्ञा गर्दाभया ।

यस श्लेष्मान्तक वनमा मृगरूपले विहार गर्दा जहाँ जहाँ म फिर्दछु, जलपान गर्दछु, सुत्छु, बस्दछु, त्यहाँ त्यहाँ तीर्थ हो भनी जान । हे ब्राह्मणमा मुख्य भयाका ? श्लेष्मान्तक वनमा वासुकीले पूवकालमा तप गर्दा वासुकीक्षेत्र भनी मेरा क्षेत्रको नाम रहन गयाको हो । तैंले यस क्षेत्रको मेरा आज्ञा भनी पालना गर्नू भनी आज्ञा प्रसन्न हुंदाभया । ती नेमुनि प्रभृति ब्राह्मणहरूले नेपालक्षेत्र भनी ईश्वरका आज्ञा पाई पूजा पाठ धर्म कर्म शास्त्र आदि प्रमाणले गरी नेपाल पालना गर्नाको उद्योग मनमा लिदाभया । हमवत् पवतका कुक्षिमा रह्याको भूमिकन नेपाल भंन्या नाम प्रख्यात हुन गयो । इन्द्रादि देवता नारद प्रद्युम्नले सहित भयाका श्रीकृष्ण श्रीपशुपतिको आज्ञा पाई मधुसूदन प्रभृति सब बिदा भै गुह्येश्वरीमा गै दर्शन गऱ्या । गोकर्णमा जाई दर्शन गऱ्या बडो उत्साहसँग मृगेन्द्रशिखरमा जांदाभया । उहांपछि वाग्मती प्रकट भयाका स्थानमा स्नान गरी अनेक दान गरी सूर्यकेतुका गृहमा जांदाभया ।

## प्रद्युम्न र चन्द्रावतीको विवाह

त्यहांपछि सूर्यकेतु राजाले नारद मुनिले विधि गराई प्रद्युम्नकन आफ्ना पुत्री चन्द्रावती कन्यादान दिया । देव दुन्दुभि आदि नाना वाद्य नृत्य गीत पुष्पवृष्टि गरी इन्द्रबाट पनि विचित्र मालाहरू नाना आभरण गरी श्रीकृष्णकन र प्रद्युम्नकन पूजा मान्य गर्दाभया । अप्सरोगण गन्धर्व किन्नरहरूले नृत्य गीत दुन्दुभि वाद्य पुष्पवृष्टि आदि गरी महा उत्सव गर्दाभया । त्यहांपछि हरिश्चन्द्रले अङ्गमा लेपन गऱ्याको इन्द्रनीलसम कान्ति भयाका शङ्ख चक्र गदा पद्म हस्तमा धऱ्याका देव गन्धर्वले पूजा गरियाका मुनिहरूले वेद घोष गऱ्याका शब्द सुनी सन्तोष भयाका हरि जो छन् गरुडमा सवार हुंदाभया । केशवका आज्ञाले प्रद्युम्न चन्द्रावती प्रभावतीकन रथमा चढाउँदाभया । स्त्रीरत्नादि सर्वरत्नले पूर्ण भयाका उत्तम रथमा आफ्ना ससुरा सूर्यकेतु राजाकन पनि चढाई कुवेरका पुष्पविमान झैं शोभा

पाउँदाभया । आकाशमार्गले लैजाँदा इन्द्रनीलसम तेजस्वी भयाका मुनिगण देवगणले युक्त भै अति हर्षमान भयाका भगवान् श्रीकृष्णबाट नेपाल क्षेत्रमा बाग्मती पुण्यजल देखी हर्ष मानी नेपालक्षेत्रको देवताहरू तीर्थहरू देखाउँदाभया । मृगेन्द्रशिखर नाम शिवपुरीमा विराजमान भयाका शिव, चन्द्रदीप्ताका तट सिद्ध वक्र भयाका शिखरनारायण, इन्द्रायणी नदीतटमा इन्द्रेश्वर दोलागिरि माथिका नारायण कर्कोटक ह्रद नागेन्द्रले वास गर्‍याको स्थान बाग्मती मनमतीका संगम शंखमूल तीर्थ त्यसै संगमबाट प्रकाश भयाका रुद्रधारा तीर्थ यो नैमिषारण्य कुरुक्षेत्र पुष्करमा स्नान गर्‍याभन्दा दशगुणं अधिक उत्तम भनी सुनाउँदाभया । वीराभद्रा तमसा पातालगंगा नदी हनूमान्‌ले शिव स्थापना गर्‍या । फेरि चंपा नदी र वीरभद्रासंगम वाल्मीकि ऋषि बसी रामायण कथा बनायाको स्थान तिलमाधव बस्याका स्थान बाग्मती र मनोहरामध्ये धमभूमि भनी कहँदाभया । हरका मुखद्वारबाट प्रकट भयाकी बाग्मतीमा जहाँ तहाँ स्नान गरोस् त पनि त्यहाँ त्यहाँ फलदायक छ । फेरि बाग्मती र विष्णुमतीमध्येका स्थान सिद्धभूमि भनी सुनाउँदाभया । रुद्रमती भयो, विष्णुमती तटका टंकेश्वरी भया, फेरि बाग्मती र विष्णुमतीका संगम जहाँ पञ्चलिङ्गेश्वर छन्, पञ्चलिंग तीर्थ भनी प्रख्यात छन् । बाग्मती र विष्णुमतीका संगम सत्याकन छेदंन गर्‍याको स्थान भनी सुनाउँदाभया । सर्वौषधिले युक्त भयाको पर्वतमा गुफाभित्र रहृयाको छन् । को हुन् भनौला त नारायण हुन् भनी पुत्रकन सुनाउँदाभया । बाग्मतीले गमन गर्‍याको द्वार कूर्मपर्वतका पश्चिम तटमा शिलारूप गणेश छन् । मोनचक्र ह्रद चन्दनागिरि तीर्थ आदि देवता तीर्थहरू देखाई परम दुर्लभ क्षेत्र भनी पुत्रकन सुनाउँदाभया ।

## श्रीकृष्णबाट गोपालेश्वरको स्थापना तथा प्रद्युम्नबाट शिखरनारायणको स्थापन

त्यहाँपछि श्रीकृष्णबाट गोपालेश्वर भनी शिवलिंग स्थापना गरी नाम प्रख्यात गर्‍या । प्रद्युम्नबाट पनि शिखरनारायण नाम प्रख्यात गरी पूजा मान्य गर्‍या । यति सबया उप्रान्त श्वेतकापुरी जाँदा हंसध्वज नाम राजाले पूजा मान्य गर्‍या । श्रीकृष्णले हंसध्वजकन म आयाको कारण कहन्छु । सूर्यकेतुसंग आफ्ना बल पराक्रमले जिती बस्याको छौ । मेरा वचन सुनी उनका राज्य छाडिदेऊ भनी आज्ञा हुँदा बहुतै खुशी भै आफ्ना दरबारमा लगी गोविन्दकन पूजा मान्य गरी सूर्यकेतु राजाको राज्य सौंपिदिया । श्रीकृष्णका आज्ञा पाई अघिको राज्य मिथिलामा गया । श्रीकृष्णका अनुग्रहले आफ्ना राज्य पाई कृतार्थ भै हात जोरी भूमिमा दण्डवत् प्रणाम गरी स्तोत्र गर्दा श्रीकृष्ण प्रसन्न भै आज्ञा गर्दछन् । हे भक्त धन्य छौ इह लोकमा सुख भोग पाई सदेह उद्धार होला भनी वरप्रसाद हुँदा सूर्यकेतु प्रसन्न भै नाना रत्नादि(चढाई)पूजा मान्य गर्‍या । प्रद्युम्नकन पनि पूजामान्य गर्‍या । प्रभावती चन्द्रावतीकन पनि नाना रत्नादि चित्र विचित्रादि आभरण दी मान्य गर्‍या । यस्ता तरहसंग सूर्यकेतुका पूजा मान्य ली वर प्रसाद प्रसन्न भै द्वारिकाविषे जाँदाभया ।

# महादेवबाट भृङ्गीलाई श्रापदान

कैलाशविषे एकान्तमा गिरिजादेवि अञ्जलि जोडी हे देव देव महादेव विचित्र कथा सुन्नाको इच्छा भयो भनी प्रसन्न गर्दिभइन् । उस समयविषे महादेवबाट नन्दीकन आज्ञा गर्‍या । हे नन्दी तँ द्वारमा चौकी बसिरह । कसैलाई भित्र आउन नदिनू भनी आज्ञा गरी विचित्र कथा कहँदाभया । यो खवर भृंगीले सुनी द्वारमा चौकी देखी जान नपाई भ्रमरका रूप धरी भित्र पसी कथा सुन्न लाग्या । कथामा रस अति पाउँदा नित्य नित्य जाई सुन्दथ्या । रात्रिमा आफ्ना स्त्री विजयाकन कहन्थ्या । एकदिन पार्वतीबाट तिमीहरूले कहिल्यै नसुन्याका कथा भनी सखीका मध्ये विराजमान हुँदा विचित्र कथा कहन लागिन् । विजयाले सुन्याबित्तिकै त्यो दुर्लभ कथा होइन । मैले पनि सुन्याको छ भनिन् र पार्वतीदेवीले महादेवसँग कसैलाई नकहयाको रहस्य कथा भनी कहनुभयाको त मेरा सखीलाई पनि यो कथा याद रहेछ । यस्ता तरहसँग मलाई ढाँट्नुहुँदोरहेछ भनिन् र श्रीमहादेवबाट यो कथा कसैलाई कहयाको छैन भनी अन्तर्ध्यान गरी हेर्दा भृङ्गीले भ्रमररूप धारी सुन्न आयाको थाहा भै क्रोध गरी भृंगीकन डाकी मनुष्य भै जन्म लिनुपर्ला भनी श्राप दिंदाभया । भृंगीले दण्डवत् गरी अज्ञान मन्द बुद्धि भयाका म दुष्टको अपराध क्षमा गर्नुहोला भनी विन्ति गर्‍या र कृपानिधि महादेवले आज्ञा गर्दछन् । हे भृंगी मेरा श्राप व्यर्थ गर्नु छैन । पृथ्वीमा दक्षिण भागमा जन्म ली धार्मिक भैतँ नवलक्ष पिशाचभाषा बनाउलास् । परम दुर्लभ क्षेत्रमा शिवलिंग स्थापना गर्लास् । मनुष्यको योनि छाडी कैलाशमा आउलास् भनी आज्ञा गर्दाभया ।

# श्रापप्राप्त भृङ्गीको ब्राम्हण कुलमा जन्म तथा उनको तीर्थाटन

भृंगी पतन भै मथुरामा विष्णुदत्त ब्राह्मणका पुत्र भै जन्म्या गुणाढ्य भनी नाम रहयो । ती गुणाढ्य ब्राह्मण गुणवान् भया । उज्जयिनीका राजा मदन नामका द्वारमा पण्डित भया । फेरि विश्राम (गरी) आश्रममा बसी पिशाचभाषया नवलक्षगाथा बनाया । त्यहाँपछि परमपीठ नेपालमा आउँदा द्विजमा उत्तम भयाका गुणाढ्यले वाग्मतीमा स्नान गरी श्रीपशुपतीश्वरका दर्शन गर्‍या । क्षेत्र प्रदक्षिणा पनि गर्‍या । सो विधि क्रमैसित कहिन्छ ।

दक्षिणद्वारबाट जाई राजराजेश्वरी१कीर्तिमुख भैरव२ वत्सलादेवी ३ गुह्येश्वरी ४ चैलगंगामा स्नान ५ गोकर्णेश्वर ६ कारुणिकेश्वर ७ सुन्दरीजलका सुन्दरीदेवी ८ वज्रयोगिनी९ दोलागिरिविषे गरुडनारायण १० बलेश्वर ११ वागीश्वर १२ वाग्मती मुक्तिकुण्डमा स्नान १३ वाल्मीकेश्वर १४ त्रिपञ्चक तलाउमा

स्नान १५ माधवकन पूजन १६ चण्डदैत्यकन वध गरी विराजमान भयाको स्थान चण्डेश्वरी १७ धनेश्वरी १८ गोखुरेश्वर १९ इन्द्रेश्वर २० लीलावती रोषमती संगम स्नान २१ ईश्वरलिङ्ग अर्चन २२ आशापुरेश्वर २३ डोलेश्वर २४ सूर्यविनायक २५ अनन्तलिंगेश्वर २६ वज्रवाराही २७ भुजंग शैल चढ़ी गुह्यद्वारमा गणेश द्वारिकन पूजा गरी योन्याकारमा प्रवेश गरी भारभूतेश्वरको दर्शन २८ मनसिला महातीर्थमा स्नान २९ हरिहरको दर्शन ३० भैरवको दर्शन ३१ मातातीर्थमा स्नान ३२ हरिसिद्धि देवीको दर्शन ३३ गोपालेश्वर ३४ शिखरनारायण प्रभुको दर्शन ३५ पन्दुकेश्वर ३६ पाण्डुनदीमा स्नान ३७ पर्वतलंघन गरी चतुर्वक्त्रेश्वर दर्शन ३८ इन्द्रेश्वर दर्शन ३९ पर्वतलंघन गरी चाँगुनारायण दर्शन ४०

परमानन्दकन्दाब्जे धर्मधातुद्रवे जले ।
महाचीनात्समागत्य बुद्धदेवः स्वयं स्थितः ॥

अस्यार्थ-परमानन्दकन्द कमलबाट प्रकट भयाका धर्मधातुरूपी जलबिषे महाचीनदेखि बुद्ध भगवान् आफै आई विराजमान भयाका (छन्) जहाँ भिक्षुहरू सुत बांधव त्याग गरी भक्तिले युक्त भै बुद्ध दर्शनका अभिलाषले बस्याका(छन्)त्यहाँ स्वयम्भू भगवान्‌का दर्शन ४१ विष्णुमतीमा स्नान ४२ लुन्तिकेश बूढानीलकण्ठ अनन्तासन गरी विराजमान भयाका हरिको दर्शन ४३ बिसङ्खुका विष्णु नारायणको दर्शन ४४ जयवागीश्वरको दर्शन ४५ यति देवता तीर्थहरूको दर्शन पर्शन स्नान दान गरी फेरि श्रीपशुपतिको दर्शन गुणाढ्य ब्राह्मणले भन्या । विधिपूर्वक पूजा भक्ति गरी ब्राह्मण भोजन गराया । क्षेत्र प्रदक्षिणाविधि तिम्रा प्रसादले पूर्ण भयो भनी बाग्मतीमा स्नान गर्‍यापछि तर्पण गरी फेरी वत्सलादेवीको दर्शन गर्‍या । दक्षिण द्वारबाट जाई देवप्रदक्षिणा गर्‍या । वासुकीको दर्शन गर्‍या । द्वारपाल गणेशको दर्शन गर्‍या । यस्ता प्रकारसंग नेपाल क्षेत्रमा बस्याका नाना तीर्थ देवतासन्धि बस्याका ब्राह्मण तपस्वीकन बोलाई सम्मत गरी वेदोक्त विधिपूर्वक गरी शिवस्थापना गरिसकी गुणाढ्यले हात जोडी ती तपस्वीहरूकन भन्या ।

## भृङ्गीश्वरको उत्पति

हे ब्राह्मणहरू सुन यी शिवकन क्या नाम राख्न्या हो भन्दा ती मुनिहरूमध्ये हारित नाम विप्रर्षि भन्दछन् । सुन गुणाढ्य तिमी मनुष्य होइनौ । केही हेतुले गरी जन्म लिन आयाको भृङ्गी नाम गर्‍याको श्रीशम्भुका द्वार पालक हौ तसर्थ श्रीभृङ्गीश्वर भनी नाम राख भनेर हारितको वचन सुनी सोही नाम प्रख्यात गर्‍या । द्वापर युगका शेष रहुञ्ज्याल यही नाम रहला कलियुगमा सुवर्णेश्वर भन्नन् यति भनिसक्या उप्रान्त गुणाढ्य अघिको

आफ्नू भृङ्गीश्वर रूप धरी विमानमा बसी कैलाशविषे जाँदाभया । अष्टमी चतुर्दशी संक्रान्तिका दिन भृङ्गीश्वरको दर्शन भक्तियुक्त जसले गर्ला त्यसलाई परमपद प्राप्त होला ।

## विरूपाक्षको उत्पत्ति

यस शिवलिङ्गमा पारसमणि थियो । कलि लाग्यापछि वज्रपात भै पारसमणि योगले अद्यापि प्रकाण्डवनका सन्धि पश्चिमपट्टि शिवलिङ्ग प्रख्यात भै रह्याका छन् । केही कालपछि अन्तर्वेदि नगरका श्रोत्रिय कुलका ब्राह्मण धर्मशर्माका पुत्र भै जन्म लियाका पूर्वजन्मका विपाकले पापचित्त भै मातृगमन सुरापान मांसाहारी अनाचारी वेश्यागमन आदि पापले जातिभ्रष्ट भयाका ब्राह्मण भै वेदशास्त्र नपढी पापात्मा भै व्रणकुष्ट प्रभृति नाना रोगले पीडित भै अत्यन्त विरूप भयाका पुत्र विरूपाक्ष स्वदेशदेखि परिवार छाडी भ्रमण भै पृथ्वीभ्रमण गरी जाँदा जाँदै कौशिकीका निकटमा पुगी शरीरका रोगले पीड़ित भै स्नान गरी पीडाका वेदनाले ईश्वरका नाम पुकारी हा कष्ट भनी रहँदा नेमुनिले देखी करुणादृष्टि गरी को हौ ? कहाँबाट आयाको हौ ? यस्ता निर्जन स्थान सिंह शार्दूलका भय भयाका स्थानमा त्यस्ता रोगी कस्ता तरहसँग यहाँ आयौ ? भन्दा विरूपाक्षले आफ्ना वृत्तान्त सब विन्ति गरी सुनाई मुनीश्वरका शरणमा पऱ्या र विरूपाक्षका भक्तिले प्रसन्न भै बहुतै कुरा गरी आज्ञा गर्दछन् ।

ईश्वरका अनुग्रहले मेरो नामले गरी नेपालभूमि नाम भयाका यस मेरा क्षेत्रमा साढ़े तीन कोटि तीर्थले युक्त भयाका फेरि चतुषष्टि लिङ्ग विराजमान छन् । देव गन्धर्वले पूजा गरिराख्याका छन् । अब तिमीले जहाँ जहाँ तीर्थ छन् । त्यहाँ त्यहाँ स्नान गरी शिवलिङ्गकन पूजा भक्ति गर । त्यहाँपछि पापमुक्त भै पुरुषमध्ये उत्तम हौला भनी भन्दा तिम्रा उपदेशमाफिकतम गर्दछु अघि अघिको उद्धार भै गया • फेरि स्नान गऱ्याका फल प्राप्त होला । शिवपूजा गरी क्या फल होला । कुन प्रकारले स्नान पूजा गर्नु यो विन्ति सब आज्ञा प्रसन्न हुनुपर्दछ भनी विन्ति गर्दा मुनि आज्ञा गर्दछन् । एक चित्त गरी तीर्थमा गंगाभावले स्नान गर्नू भनी अघि अघि उद्धार भै गयाका पापात्माहरूको कथा सुनाई तीर्थाटनमा निश्चय गराई तीर्थ लिङ्ग कुण्ड यात्राका आरम्भ गराया ।

प्रतितीर्थ देवताका माहात्म्य सुनाई वाग्मतीका तीर्थ ८९ शिवलिङ्ग ६४ आदि उपलिङ्ग उपतीर्थहरूका मेला भरी क्रमैसित यात्रा गरी आउँदा आउँदा महापातकहरूले ग्रस्त भै महारोगहरूले पीडित भयाका विरूपाक्षले सिद्धदेखि यस्तो उपदेश पाई तीर्थयात्रा गरी पाप ताप घट्दै गयाको थियो । केवल पापमुक्त भै सकिआको थिएन । नेमुनिकन खुशी गराई उपदेश पाई मणिचूड पर्वतमा जाई ईश्वरीकन स्तोत्र पूजा भक्ति भावना गर्दा देवी प्रत्यक्ष भै वर प्रसन्न भया । हे पुत्र विरूपाक्ष तिम्रा पूजाले म संतुष्ट भया । अब तिम्रा पाप सब नष्टभयो । फेरि तिमीलाई वर पनि दिन्छु सुन भनी " सम्पूर्ण पाप नष्ट

भै देहस्थैमा मुक्त भये । चिरञ्जीवि भै शिव भै रह" भनी वरदान दी अन्त्यर्धान हुँदिभइन् ।

## वज्रयोगिनी उग्रताराको उत्पत्ति

अब वज्रयोगिनीका पूर्व कथा कहिन्छ। पूर्वकालमा ब्रह्मा विष्णु महेश्वरले मणिमय पर्वतमा तप गरी ईश्वरीकन प्रसन्न गराया । कस्ता ईश्वरी भनौला त विष्णुका नेत्रमा स्थिति भयाका ब्रह्माले नमस्कार गरियाका योग निद्रा स्वरूपी हुनाले योगेश्वरी भनी नाम प्रख्यात भया । फेरि कोही एक दिनमा नारद मुनिका वचन सुनी कलिङ्ग देशका राजा देवदास नाम भयाकाले योगेश्वरीको महात्म्य सुनी प्रेम भक्त गरी आफ्ना छोरालाई राज्य सौंपी महामाया स्मरण गरी महाकष्टले नेपाल आई योग गंगातीर्थमा स्नान गरी गणेशादि नमस्कार गरी संसारको भोग छाडी महामन्त्र जपी तप गर्दा परमेश्वरी प्रसन्न भै दर्शन दिदिभइन् । कस्ता तरहले दर्शन दिया भन्या चित्तरूप भै शिवशक्तिस्वरूप उमामहेश्वर महाभयंकर रूपले कातिक कृष्ण नवमीका दिन दर्शन दिदिभइन् । राजाले अनेकप्रकारसँग भूमिमा दण्डवत् प्रमाण गर्दा ईश्वरीबाट वरदान दी आज्ञा गर्दिभइन् । 'हे राजन् तिमी सदेहमा मुक्त भयौ । अब उमामहेश्वर लोकमा जाऊ' भनी आज्ञा गरी देवी लोकबाट सूर्यप्रभा विमान ल्याई राजाकन राखी सदेहैमा देवी लोकमा गमन गराया । राजाले यापन गऱ्याको संख्या एक लाख १००००० सम्म पुगिसक्दा वरदान पायाको हो । त्यहाँ उप्रान्त ईश्वरीबाट यस्ता तरहसँग वरदान प्रसन्न हुदिभईन् । जो कोही जन हवस् यो पुरीमा आई दान पुन्य गर्नन् । सो पुण्य अक्षय होला । फेरि देहान्तैमा परंधाम जाला । फेरि अरू अरू ठाउँमा गऱ्याको पुण्यभन्दा पनि यस स्थानमा एकवार मन्त्र जप्याको कोटि कोटि गुण फल प्राप्त होला भनी भनी महामायाबाट आकाशवाणी प्रसन्न भै अन्तर्ध्यान हुँदिभइन् । सोनिमित्त विना वज्रयोगिनी नजाई सिद्धि पाउन महाकष्ट छ । वज्रयोगिनीमा भक्ति गऱ्या सर्वसिद्धि पाई उद्धार भै जाला फेरि तीर्थ यात्रा गरी आउँदा पशुपतिमा पुगी आर्याघाटमा स्नान गरी पूजा भक्त गरी विरूपाक्ष त्यहाँ सिद्ध भै मुक्तिपद पाई देवताको वर पाई अद्यापि त्यहीं बस्दाभया ।

## नेमुनि र धर्मराजाको वार्तालाप

नेमुनि पनि अरू मुनिहरूले सहित गरी मणिचूडमा जाई बस्या । यिनै मरीचका पुत्र मुनिले पूर्व कालमा १२ वर्षसम्म शैलकोट पर्वतमा रही तप गर्दा श्रीवज्रयोगिनी प्रसन्न भै तेरा तपले म सन्तुष्ट भयाँ । सब जोगीहरूभन्दा पनि सिद्ध भयौ । ऐलदेखि क्षयपर्यन्त तिम्रा नामले गरी नेपाल भनी प्रख्यात भै संसारमा सिद्ध भै रही अन्तमा म विषे लिन होला । हे पुत्र यो नेपालकन त्रैलोक्यमा गरिष्ठ भयाको भुक्ति मुक्ति दायक क्षेत्रमा श्री पशुपतिकन अर्चन गरिरहनू । केही कालान्तरमा त्यस क्षेत्र न्हद भै

रहला। यति ईश्वरीबाट नेमुनिले नेपालकन धर्मले पालना गर्नू भन्या वर पाया उप्रान्त विना नीति मार्गले गरी मनुष्यलोककन स्थिति हुँदैन भनी मनमा विचार गरी न्यायको रीत धर्मराजसंग सोधनी गर्न जानुपर्‍यो भनी जाई विन्ति गर्दाभया। हे प्रभु धर्मराज कलि प्राप्त हुँदा सूक्ष्ममति भयाका मनुष्यहरुकन उपकारनिमित्त भूमि गौ दास पशु व्रीहि धान आदि गृहादिको सुस्थिर वृद्धिताकन विना न्यायका विचारले केही कुराको पनि कदाचित् वृद्धि हुदैन करता तरहसंग राज्यपालना गर्न्या हो भनी विन्ति गर्दा यमराज आज्ञा गर्दछन्। तिमीले ठूलो कुरो प्रसन्न गर्न आयौ। सत्यले गरी म कहन्छु। सुन, गुरुदेखि मन्त्र युक्त गराउनू। सुची शौच व्रत सत्यवाचामा राख्नू र धर्म अधर्मको विचार गर्दै रहनू। स्वामीका अधीनमा राख्नू। त्यसकन कदाचित् भय प्राप्त हुँदैन। त्यस्ताका शरीरमा म आफैं जाई धर्म चेष्टा गराउँला। यस्ता रीतले मन शुद्ध भयाका मानिसकन सुस्थिर गति इहत्र परत्रमा भुक्ति मुक्ति पाउन जाला। अन्यथा नास्ति स्थिति हुँदैन भन्या आदि नीति गति धमराज देखि सुनी आफ्ना आश्रममा जाई यमराजका वाचा अनुसार शास्त्रका प्रबन्धले गरी पशुपति क्षेत्रकन धर्मले पालना गरी लोककन बोध दी नियम गराई व्रतादि उपवास गराइरह्या। नेमुनिले पालना गर्दा नेपाल भनी प्रख्यात भै गयो। तसर्थ विना नेमुनिका कृपा नभै ज्योतीश्वरका दर्शन पाउनु कष्ट छ।

## नेपाल क्षेत्रको संक्षेप वर्णन

नेपालका गुरु नेमुनि हुन्। यिनका पहिलेको आश्रम दुम्जामा हो। फेरि तन्त्र अनुसारले नेपाल क्षेत्रका संक्षेप वर्णन— गुह्येश्वरीकन आवरण गरिरह्याका प्रथम आवरण पीठहरू— गन्धर्वद्वीप विडाल क्षेत्र नदीदेवी ब्रह्मायणी सम्यक् चुलीमा, गोमेदद्वीप धनदक्षेत्र रक्तादेवी माहेश्वरी वेथनचुलीमा, सरद्वीप पुष्पदन्त क्षेत्र सुमनादेवी कुमारीदेवी फुलचोचुलीमा, सूर्यद्वीप महानन्द क्षेत्र मनमतीदेवी वैष्णवी पीठ मयेनुकोटी चुलीमा नयनद्वीप गोपालक्षेत्र कुलाकृतदेवी वाराही पीठ नटारम्भ चुलीमा, वसन्तद्वीप शोभनक्षेत्र तारावतीदेवी इन्द्रायणी पीठ लिंगुचोचुलीमा, स्वर्णद्वीप चण्डिकाक्षेत्र शुभकीर्तिदेवी चामुण्डादेवी. पीठगन्चो चुलीमा, नर अन्तद्वीप प्रीतिप्रियक्षेत्र सवरीदेवी महालक्ष्मी पीठ शिवपुरी चुलीमा द्वितीय आवरण पीठ-रत्नद्वीप महाकायक्षेत्र धर्मादेवी ब्रह्मायणी पीठ पनौतीमा, पुष्करद्वीप श्रुतिधर क्षेत्र दन्तुरादेवी माहेश्वरीपीठ टीकाभैरवमा, एकपादद्वीप विक्रम क्षेत्र वामादेवी कौमारीपीठ भंगुलीचोमा, स्वर्णद्वीप चन्दनाथक्षेत्र सुभकिरणीदेवी वैष्णवीपीठ गोखुमा, पुष्करद्वीप श्रुतिधरक्षेत्र दंतुरादेवी वाराहीपीठ लम्जुङ्मा, नयनद्वीप गोपालक्षेत्र काकीदेवी इन्द्रायणीपीठ वलिगमा, स्वर्णद्वीप चण्डनाथक्षेत्र सुपकिनीदेवी चामुण्डापीठ मोकर्णमा, गोवर्धन

द्वीप चित्ररथ क्षेत्र नटीदेवी महालक्ष्मीपीठ सारंदुगाखुमा,

तृतीय आवरण पीठ-प्रयाग क्षेत्र असितांग भैरव ब्रह्मायणीपीठ वतावुमा, वाराणसीक्षेत्र रुंड भैरव माहेश्वरी पीठ गिमतोमा, कोलापुर क्षेत्र चण्डभैरव कौमारी पीठ सुनागुठीमा, अट्टहासक्षेत्र क्रोधभैरव वैष्णवी पीठ वलखुमा, जयन्ती क्षेत्र उन्मत्त भैरव वाराही पीठ होस्याङमा, चरित्र क्षेत्र कपाल भैरव इन्द्रायणी पीठ ख्वथुलमा एकाम्बर क्षेत्र भीषण भैरव चामुण्डा पीठ चैलगंगा सन्धिमा, देवीकोट क्षेत्र संहार भैरव महालक्ष्मी पीठ कान्तिमा,

चतुर्थ आवरण—जालन्धर पीठ जालेश्वरी साररुडूमा, पूर्णगिरिपीठ पूर्णेश्वरीदेवी लुमुडीमा, कामरू पीठ कामेश्वरी देवी गोखुमा,यी तिनका भित्र उद्यान पीठ श्रीगुह्येश्वरी देवी श्री पशुपति ज्योतिरूप शिव विराजमान छन् ।

## काशीभन्दा चतुर्गुण फलदायक पशुपति क्षेत्र

गण्डकी कौशिकी नीलकण्ठेश्वर नटारम्भेश्वर यतिमध्ये नेपालक्षेत्र यस भित्रका पशुपतिक्षेत्रका शिरमा मृगेन्द्रशिखरका कूटेश्वरदेखि दक्षिण निलेश्वरसम्म पूर्व विकटेश्वरदेखि पश्चिम चदनभूटेश्वर सम्म योगधारा नदीदेखि विष्णुतीर्थपर्यन्त गोदावरीदेखि हरितीर्थसम्म यति अष्टदिकूभित्र पशुपति क्षेत्र भुक्ति मुक्ति दिन्या परमक्षेत्र हुन् । गुह्येश्वरी नाम ईश्वरी जहाँ विराजमान छन् । त्यहाँ अष्ट मातृका आफ्ना आफ्ना गणले सहित भै विराजमान छन् । श्री पशुपतीश्वरका दक्षिणद्वारमा विराजमान भयाका गणेश क्षेत्रपाल अष्ट चिरञ्जीविहरू वत्सलादेवी राजराजेश्वरी पूर्व जन्मका स्वरूप दर्शन हुन्या कुण्ड चन्द्र पितामह भैरव विरूपाक्ष अनन्तनाग यी देवताहरू आफ्ना आफ्ना गणले युक्त भै रह्याका छन् । पश्चिमद्वारमा लम्बोदर दण्डपाणि वरुण वागीश्वरीदेवी नारायण आफ्ना आफ्ना गणले युक्त भै विराजमान छन् । उत्तरद्वारमा एकदन्त गणेश नन्दीकेश पौलस्त्य कुवेर गुह्यक गणहरूले युक्त विजयादेवी योगिनी गणसहित सिद्ध गणहरू रह्याका छन् । यस्ता प्रकारसंग दैत्र देवी प्रथम गणले सहित विराजमान छन् । धन्य पशुपतिक्षेत्र धर्मार्थ काम मोक्ष फल दिन्या स्थान भनी कहियाको छ ।

महापद्ममा मेरुकर्णिका भयाका सहस्रदल कमलपत्र भयाका साक्षात् माहेश्वरी पुरी कह्याका छन् । स्वर्ग मर्त्य पातालमा दुर्लभ भयाका क्षेत्रमध्ये देवताका नायक भयाका परात्परनिर्गुणेश्वर विराजमान छन् भनी कुमारले अगस्त्य मुनिकन सुनाया । धन्य पशुपति पुरी ७२ बहत्तर भुवनमा संसारका सार दुर्लभ छन् । जम्बूद्वीपमध्ये दुई पुरी उत्तम छन् । काशी पुरी र पशुपतिपुरी छन् ।

मोक्ष एक थोक मात्र दिन्या काशी छन् । धर्म अर्थ काम मोक्ष चतुर्वेशोक्त फलदायक पशुपति पुरी हुन् । त्यसैकारण काशीभन्दा चतुर्गुण अधिकपुण्यदायक क्षेत्र भनी कहियाको छ ।

अयोध्या मथुरा माया काशी काञ्ची अवन्तिका
पुरी द्वारावती सप्त गरिष्ठा मोक्षदायकाः ॥

यी सात पुरी संसारका सार हुन् यी सातपुरीभन्दा पनि उत्तम पशुपति पुरीहुन् । जहाँ ज्योतिलिङ्गेश्वर वाग्मती सहित छन् । बलिराजाका हुकुम मानी दैत्य जनले हिमवत् उत्तरमा मान तीर्थ भयाका स्थान आई शुक्राचार्यले संकल्प गराई देवलोक जित्नानिमित्त नाना प्रकारले दैत्य जनले तपस्या गरिरहँदा दिव्य वर्ष सहस्र नपुग्या सम्म विष्णु आराधना गर्दा तिनीहरूकन उद्धार गर्नानिमित्त विष्णुले श्रीमहादेवका आज्ञाले दैत्यहरूकन सात ज्ञान दी राज्यको लोभले जगत् गराई देवताहरू पनि दैत्यहरू पनि प्रतिपाल गर भन्या वचन सुन्या ।

## बुद्धको उपदेश

शुद्धोदन राजाकी रानी मायादेवीका गर्भमा दश महिनासम्म बसी लोकायनमा तेस्रो युगका अन्त्यमा लोकरक्षा गर्नानिमित्त मायादेवीका काखीबाट माघ शुक्ल चतुर्थी श्रवणनक्षत्र बुधवारका दिन जात भया । कलि प्राप्त भया । यस दिनमा स्वर्गबाट पुष्पवृष्टि दुन्दुभि वाद्य अप्सराहरूका गीत शब्द आदि नाना सुशब्द भै लोकहरूको आनन्द भयो । यी बालख सर्वलक्षणले संयुक्त भयाका थिया । ती बालखलाई शाक्यसिंह भनी नाउँ राखी तीन वर्षमा मुंडन गरी सात वर्षमा जनै दिया । पछिबाट बौद्धाचार्य भैं ब्रह्मादिले स्तुति गऱ्या । ऋषिहरू समूह भै यस्ता अवसरमा इन्द्रले छत्र ली चढ़ाया । वायुले लिपी चामरले हांक्या दिक्पाल आदि सबैले सेवा गऱ्या ।

यहाँपछि देवताहरूका वचन सुनी भगवान् जहाँ दैत्यहरूले तपस्या गऱ्याको छ, त्यहाँ पुग्दा दैत्यहरूले शाक्यसिंहकन देखी विष्णुले बौद्ध अवतार धाऱ्याको हो भनी नाना प्रकारसँग स्तुति भक्ति गरी त्रैलोक्यका भोग वाञ्छा गरी वर माग्दा शाक्यसिंहबाट हे दैत्य तिमीहरूले राज्यको लालच नगर तिमीहरूलाई परम पदवी ज्ञान कहुँला भन्दा दैत्यहरूले विन्ति गऱ्या । हे भगवान् ज्ञान भोगमा त हामी बसुँला । तर अमरावती राज्य गर्न नपाया हामीहरू खान पाउदैनौं । भोकले ज्ञानमा बसेर क्या सुख होला भनी विन्ति गर्दा भगवान्ले आज्ञा गर्दाभया । हे दैत्यगण तिमीहरूले यो लोकमा कसैले अश्रद्धा भै क्रोधले दान दियाका फेरि अर्पण नगरी खायाका द्वन्द्वभावले गऱ्याका अर्चन क्रोधले गऱ्याको पुण्य यो सबै तिमीहरूले खानू भनी वरदान दी दैत्यहरूलाई बुझाई बौद्ध ज्ञान कही दैत्यहरूकन बुझाया - अहिंसा परमं धर्म अहिंसा परम सुखम्

अहिंसा परमं ज्ञानम् हिंसा परमं पदम् ॥
हिंस्यमानो दिवं याति हिंसको नरकं व्रजेत्
तस्माद् हिंसा न कुर्वीत चैतद् बुद्धस्य संमतम् ॥

प्रभृति इन्द्रियज्ञान प्राणायाम ज्ञान योगज्ञान अन्तर्गतिज्ञान भेदप्रभृति नाना शुद्ध ज्ञान वर प्रसन्न

भयाका दैत्य कलिका राजा नहुनु परधन परस्त्रीप्रभृति नानापापले अर्काको सर्वस्व खाई कामक्रोधादि उत्पात गराई नाना पाप मुक्त गरी पछिबाट् नरकमा पर्नुपर्ला । सोनिमित्त बौद्ध ज्ञान धरी आफ्ना आफ्ना स्वतन्त्र गरो आनन्दसित विहार गरी बस्दाभया । दैत्यहरू सब मिली भगवान्कन नमस्कार गरी आफ्ना आफ्ना सहर फर्की आनन्दसँग बस्दाभया । यहाँ उप्रान्त भगवान् नेपालमा विराजमान भया । यहाँ त्रिदशगण आई जातिस्मरण तीर्थमा स्नान गरी भगवानकन नमस्कार गरी आफ्ना आफ्ना खुशीसँग राज्य प्रतिपालन गरी आनन्दसित रहँदाभया । जातिस्मरण तीर्थमा जसले स्नान गर्ला । त्यसकन स्वर्गवास पाउला । भगवान् बस्याको ठाउँ –

मोदन्ते स्म सुराः सर्वे बुद्धे वतरिते मुनौ

तदादि चोत्तरे देशे हिमवतो गिरेः सदा

त्यहाँ देवतागण हर्षमान भै स्वर्गमा विराजमान भया ।

## चार प्रकारले रहेका देवताहरू

नेपालका देवताहरू अघि पनि लेखियाका छन् । तिनै देवताहरूमध्ये चतुः प्रकारका बोधनिमित्त फेरि कहिन्छ । तीन युगसम्म देवताहरू बारंवार तिथि योग संयुक्त भयामा वाग्मती आदि तीर्थहरूमा स्नान गरी पशुपतिनाथ गुह्येश्वरी प्रभृति देव देवीहरूका दर्शन स्पर्शन गर्न आउ दै जाँदै गर्दथ्या । यस नेपाल पुरीमा पवित्र नदी धेरै छन् । तन्त्रमा कहियाका प्रसिद्ध गंगा वाग्मती रुद्रधारा मनमती विष्णुमती भानुमती प्रभावती कहियाका छन् । वाराणशी स्थलभन्दा चतुर्गुण अधिक पुण्यस्थल हुनाले देवतामा पनि चतुः प्रकारले स्थित भयाका देवताहरूका नाम –

आदौ गणेश ४ – चन्द्रविनायक चोभारका १ सूर्य विनायक भक्तपुरका २ रक्तविनायक देवपट्नका ३ श्वेतविनायक चार्वाहिलका ४

काली पनि ४— गुह्यकाली १ वत्सला २ दक्षिणकाली ३ कालिन्चोकको महाकाली ४

कुमारी पनि ४— बालकुमारी कुमारडोलमा १ बालकुमारी ठिमी २ मयतिदेवी पञ्चबाल – कुमारी ३ पाटन बालकुमारी आवाहना गरी क्वाक्षेमा स्थापना गर्‍या ४

गंगा पनि ४— वाग्मती १ मनमतो २ विष्णुमती ३ रुद्रमती ४

नदी पनि ४— प्रभावती १ हनुमतो २ दानामती ३ इक्षुमती ४

वाराही पनि ४— श्वेतवाराही उत्तर १ नीलवाराही वंपू २ वज्रवाराही दक्षिण ३ धंतिलवाराही पश्चिम ४

योगनी पनि ८— बज्रयोगिनी १ ह्लंगुयोगिनी २नीलतारायोगिनी फूलचोकि देवी ३ बीजेश्वरी

यिनमा ब्रह्मकुमारी विद्याधरी नाम ग्न्याकी सिद्ध भै पछि मिल्न गयाकी छन् ४

नारायण पनि ४— गरुड़नारायण दोलागिरिमा छिन्नमस्ता शक्तिसहित १ चयजुनारायण चण्डेश्वरीसहित २ नृसिंह नारायण शिखरि लक्ष्मीसहित ३ इचंगुनारायण माहेश्वरी वैष्णवी शक्तिसहित ४

महालक्ष्मी पनि ४— महालक्ष्मी बोडेका १ महालक्ष्मी लुभुका २ महालक्ष्मी पाटन लगनखेलका ३ महालक्ष्मी खोकनाका ४

वैष्णवी पनि ४— वैष्णवी यप्पाका १ तोडपीठ वैष्णवी नदलका २ वैष्णवी बलखुका ३ वैष्णवी भाजंगालका ४

फेरि द्वापर युगका मानसरोवरदेखि शिला नदी तरी आयाकी जयवागीश्वरी कहलाई देवपट्टनमा विराजमान भयाकी छन्। यिन देवीकन प्रथम गणहरू आई नियम गरी साधना गरी तीर्थका जल आवाहन गरी शुद्धतीर्थ बनाइदिया पशुपति पुरीका पश्चिम दिग्का रक्षकारि हुन् राजराजराजेश्वरी पनि कामरूप पीठदेखि आई पशुपतिका दक्षिण भागमा शिलारूप विराजमान गराया। यी दुइ ईश्वरीसहित नव ईश्वरी भै प्रकाश भया। गुहेश्वरी १ वत्सलेश्वरी २ वज्रेश्वरी ३ कोटेश्वरी ४ भ्कंकेश्वरी ५ भुवनेश्वरी ६ मङ्गलेश्वरी ७ राजराजेश्वरी ८ जयचन्द्रेश्वरी ९ यी नौ ईश्वरी मूलमूर्ति भै सदा रक्षकारि भै विराजमान भयाका छन्। नेपालपुरी उत्तम भनी भूतल मार्गले गरी नीलचूड पर्वतका मुनिबाट गोदावरी प्रादुर्भाव भइन्। फेरि यही क्रमले त्रिशूल गंगा पनि जमाल पर्वतबाट प्रादुर्भाव भइगया। यी दुई तीर्थ आग्नेयकोणबाट प्रकाश भयाका छन्। हिमालय खण्ड युक्त गर्नानिमित्त चैत्य रूप भगवान् धर्मधातु वागीश्वर भनी आफैं आई स्वयम्भू कहलाई विराजमान हुँदाभया र शिवलिंग ज्योतिरूप पशुपति पीठमा गुह्येश्वरी र वत्सला एकै हुन्। चैत्यमा स्वयम्भू श्मशानमा करवीर यति युक्त हुंदा शुद्ध पीठ भयाको हो।

## स्वयम्भू तथा भीमडुङ्गा

हरिणेश्वर पशुपतिका आज्ञाले नेपाल जलमय हुन्या छ। त्यस जलमा विराजमान हुँला भनी ब्रह्मा विष्णु इन्द्रकन पूर्वकालमा आज्ञा भयाको पुऱ्याउन निमित्त ईश्वरका इच्छाले महेन्द्रदमन आदि दानवहरूले बैन्ही प्रभावतीकन जलविहार गर्ननिमित्त वाग्मतीकन थुनी १६ वर्षसम्म जल पूर्ण गरी राख्दासमय एक कमल उत्पन्न भै स्वयंभू स्थानमा स्पर्श गर्न जाँदा पद्मगिरि भनी सबै देवताहरू स्वयंभू क्षेत्रमा आउंदाभया। यसै समयमा मञ्जुश्री पनि आई स्वयंभूकन प्रकाश गऱ्या। जंगल बनाई सेवा गऱ्या। विष्णुबाट पनि द्वापर युगका अन्तरमा बौद्धावतार लिंदाभया।

केही कथान्तरमा भीमसेन दोलखाबाट भीमेश्वर भनी नाम कहलाई नेपालमा आई भीमेश्वर भनी

नाम प्रख्यात हुँदा नेपाल तलाउदेखि डुंगामा बसी खेली आउँदा दैत्यकन्याहरूकन भगाया भन्या कुरा कथान्तरमा छ । डुंगा अद्यापि भीमडुंगा छंदैछ । श्रीभगवान् विष्णुबाट बुद्धावतार धारण गरी उत्तराखण्डविषे आई जातिस्मरण तीर्थमा तपस्या गरिरह्याका दानवहरूकन बौद्धज्ञान दी भिक्षुचर्यामा राख्या । त्यहाँ उप्रान्त नेपालमा शिवमार्ग बौद्धमार्ग यी दुई मार्गको मिश्रित भै गया । महेन्द्रदमन आदि दानवहरूले वाग्मतीकन थुनी नेपाल खाल्डाकन जलले पूर्ण गरिराख्दा विशालनगर आदि सहर ग्राम नष्ट भै गयापछि सुप्रभा नगर पनि उजरिगया । उप्रान्त केही कालपछि बुद्धमार्गका शास्त्रप्रमाणले केही वार्ता कहिन्छ ।

## भाटभटेनी, तथा पिंगला रानीको तपस्या

भाटभट्यानि माता पिता भ्राता देवता सहितभैआकाशैचारी भै आई विशालनगर उजड़दै गयाको स्थानमा फेरि नगर बसाया । पछि एक ऋषिपुत्रकन स्वयंवृत नाम राखी राज्याभिषेक दी नगरका रक्षा गराया । यहाँ उप्रान्त केही कालपछि मारवाड देसका राजा सुदत्तकी रानी पिंगला नाम गन्याकीथिइन् । आफ्ना स्वामीले धेरै अपमान गरी मायात्याग गरी राख्दा पिंगला रानी मनमा बहुतै दुःख मानी स्वामीको कृपादृष्टि हवस् भनी ईश्वरी पुकारिरहँदा नेपालपुरीकन स्वप्न देखिन् र श्रीगुह्येश्वरीका शरणमा जानुपर्‍यो भनी नेपालपुरीमा प्राप्त भै गुह्येश्वरीका स्थानमा स्वप्न प्रमाण ठहराई निराहार गरी तपस्या गरी रहिन् र ईश्वरी प्रसन्न भै हे रानी तेरा मनोरथ पूर्ण हुन्याछ भनी वरदान प्रसन्न भइन् । त्यहाँ पछि ती रानीले मञ्जुविहार नाम विहारगृह बनाई चार धारा जल साधन गरी जलाकृति बनाई त्यसै घरमा बसी नित्य नित्य देवीका स्थानमा जाई सेवा गरी मोहनी लाई सेवा गरिरहँदा समय लोहवान देवहरूले प्रहार गरी खेल्याका शिला भै गया र लोहशिला नाम कुमारीगण अति भयंकर भया र पिंगला रानीले गुह्येश्वरीमा बिन्ति गरी श्वेतविनायक जगाया । ती गणेश बौद्धप्रिय हुन् ।

केही वर्षपछि रानीका धर्म वृतका प्रभावले आफ्ना स्वामी सुदत्त राजाका चित्त चंचल भै रानीकन खोज गरी नेपालपुरीमा आई गुह्येश्वरीका स्थानसन्धि पुग्दा पिंगला रानीकन देवताहरूले दिव्यसुन्दरी देखी भ्रान्तिभै रहँदा राजा सुदत्त त्यसठाउँमा आइपुग्या । देवताहरूले रानीकन छेकी समात्न तयार हुँदा पिंगला रानीले भयले ईश्वरीका नाम पुकारी मलाई रक्षागर म पिंगला रानी हुँ भनी पुकार्दा राजा सुदत्तले सुनी मेरा रानी पिंगला त यत्तिको सुन्दरी थिइनन् भनी दोमन भै पछिबाट मेरी रानी हो भनी नजीक जाँदा रानीले राजा सुदत्ताकन चिन्ही प्रणाम गरी देवीका निकटमा जाई रानीले स्मरण गरिरहिन् । त्यहाँपछि राजा सुदत्ताले देवताहरूकन अहो देवताहरू रानी त मेरी स्त्री हो । तिमीहरूले हरी लैजान खोज्दछौ । यहाँ नबस जाऊ भन्दा देवताहरूले राजा सुदत्तकन धेरी मिथ्या कुरा गर्छस् । यस्ती सुन्दरी स्त्री तेरो कसोरी होला भनी मान तयार गर्दा श्रीगुह्येश्वरीबाट आकाशवाणी भै देवताहरूकन

बुझाई पठाई स्त्री पुरुष मिलाई दिंदिभइन् ।

केही वर्षसम्म राजा रानी दुवैले मंजुवहारमा बसी सेवा गरी ईश्वरीका आज्ञाले स्वदेशमा जाई आनन्दसित रही अन्तमा उद्धार भै गया । यहांदेखि यो नेपाल पुरीमा देवताहरूका महिमा माहात्म्य घटिगयो भनी जानी श्रीभैरवहरू चार मिली सम्मत गर्न लाग्या । प्रथम नुवाकोट भैरव दोस्रो भक्तपुरका भैरव तेस्रो टीकाभैरव चौथोमध्ये पञ्चलिंग भैरव आगमचोदेखि आयाका यी चारै भैरव समूह भै नेपालमा कलियुगदृश्य हुन लाग्यो । अब विना राजाले ग्रहले हाम्रा रक्तपानकन हुन्याछैन भनी राजा तुल्याउन इच्छा गर्दाभया । यो वृत्तान्त सबै इन्द्रायणी देवीले जानी त्रिशूलगंगाघाटबाट अब नेपालपुरीमा सदा सर्वदा राजिक हुन्याछन् भनी आई नेपालपुरीका उत्तरभागमा मनमयजु भनी प्रख्यात भै विराजमान हुंदिभइन् । यी देवी आयाको थाहा पाई दिग्कौमारीहरू सबै प्रकाश हुंदाभया । पूर्व ठिमीका बालकुमारी दक्षिण कांत्ते बालकुमारी पश्चिम बलखु पीठदेखि ज्ञानेश्वरसन्धि आई मयतिदेवी कहलाई रह्याका छन् । अघि विशालनगरका श्मशानेश्वरी भै रह्याका उत्तर मंगलपुरका कौमारीहरूले नेपालका राजीक देवतादिरूपि हुन् । यति देवतादिहरूको महिमा द्वापरयुगभित्र भै गयाको हो ।

## युगभोगसंख्या तथा दशावतारवर्णन

युगभोगसंख्या–सत्ययुगका भोग सत्र लाख अट्ठाइस हजार १७२८००० मनुष्यका आयु प्रमाण दश हजार वर्ष १०००० धर्मज्ञ प्राण वायु शुक्ल स्थान भेद सन्धि स्थितिकर्ता विष्णुबाट धारण गर्‍याको अवतार मत्स्य अवतारमा संखासुरकन मारी चतुर्वेदकन रक्षा गर्‍या १

कूर्मावतारमा देव दैत्यहरूले समुद्र मथन गर्दा जलमा डुबी कर्मठरूप भै आफ्ना पीठमा पर्वत राखी समुद्रमथन गराया। २

वराह अवतारमा हिरण्याक्षक वध गरी जलमा डुबियाका पृथ्वीकन धारणा गरी महीकन सुस्थिरसंग राखदाभया । ३

नृसिंह अवतारमा हिरण्यकश्यपुकन, मारी प्रल्हाद आफ्ना भक्तकन रक्षा गर्दाभया ४

त्रेतायुगका भोग–बाह्र लाख छयान्नब्बे हजार १२९६००० मनुष्यका आयु प्रमाण पांच हजार ५००० वर्ष प्राण वायु अस्थि सन्धि विष्णुका अवतार ३

वामन अवतारमा त्रिविक्रम रूप भै बलि राजाकन छली पातालपुरीमा पठाई इन्द्रदिदेवताहरूकन स्वर्ग भोग गराया ५

परशुरामावतारमा जमदग्निका पुत्र भै सहस्रार्जुनकन वध गरी फेरि २१ बार, पर्वत पृथ्वीतलविषे क्षत्रिय रूकन मारी निक्षत्रिय गरी चिरञ्जीवि भैगया । ६

रामचन्द्र अवतारमा सीतासहित बनवास गरी सीताको कारण गरी वानरहरू सहाय गरी सेतुबन्धन गरी लंका जाई रावणादि दैत्यहरू मारी विभीषणलाई राज्याभिषेक दी सीताकन साथ लीः अयोध्या फर्की हनूमान् र विभीषणकन चिरञ्जीवि वर प्रसन्न भया । ७

द्वापरयुगका भोग आठ लाख चौसट्ठी हजार ८६४००० मनुष्यका आयु प्रमाण हजार वर्ष १००० प्राण वायु रक्त मांस विष्णुका अवतार २ बलभद्र अवतारमा गोकर्ण रक्षा गरी हल धारण गरी धेरै दानवहरू मार्‍या । सुतकन मारी ब्रह्महत्या लाग्यो भनी बहाना गरी महाभारत हुँदामा रह्याका कृष्णले भारत संपूर्ण गर्न आट गर्न्या छैन भनी निहुँ गरी पहिले विदा ली महाभारत हुञ्ज्यालसम्म तीर्थ यात्रा गरिरह्या ८

यहाँपछि बुद्धावतारमा बलिराजाका आज्ञाले दानवहरू धेरै मिली त्रैलोक्यका भोग वाञ्छा गरी जातिस्मरण तीर्थमा तीर्थव्रत गर्दासमय इन्द्रादिलोककन रक्षा गर्नानिमित्त शाक्यसिंह नामधारि आई दानवहरूकन बोध ज्ञान दी "अहिंसा परमो धर्म" प्रभृति ज्ञान शिक्षा दी स्वर्गका भोगको वाञ्छा छुटाई बौद्धमार्गमा राखी इन्द्रादिकन रक्षा गरी बौद्धमार्गको वृद्धि गरी वेदमार्गको प्रशंसा घटाया ९

कलियुगका भोगवर्ष चार लाख बत्तीस हजार ४३२००० मनुष्यका आयु प्रथम पादमा सय वर्ष १०० प्राण वायु अन्नमय द्वितीय पादमा स्थुलाहारि मनुष्यका आयु वर्ष ५० तृतीयपादमा मनुष्यका आयु वर्ष १६ भक्षण तृणपुष्पफलानि कलियुगका अर्धभागमा विजयाभिनन्दन राजा जन्म ली समस्त दुष्ट जन खण्ड गरी साधु जन लोककन सुखभोग दिन्याछन् । स्वयं सहस्रवर्ष जीवति । विष्णुका अवतार कलंकि १०, श्लोक

अन्ते कलंक्यवतारे दुष्टप्राया मनुष्याः स्युः
युगखड्गेन तान् सर्वान् दुर्जनान् नाशयिष्यति
नृणां प्राणाः कृते मेदे त्रेतायामस्थिसन्निधौ
द्वापरे रक्तमांसे स्युः कलौ चान्ने व्यवस्थिताः

युगका भोग प्रमाणले गरी संसार मध्यमा धर्म अधर्म काम मोक्ष शुभाशुभ देवता नदी तीर्थ शास्त्रादिका प्रमाण मनुष्यादिहरूका आयुर्दा बल बुद्धि पराक्रम क्रमैसँग घट्दै जान्याछन् ।

भविष्यपुराणका वचन –

दशवर्षसहस्राणि विष्णुनामानि गोचरे ।
तदर्धं जाह्नवीतोयं तदर्धं ग्रामदेवता ॥

अस्यार्थ—कलियुगका १०००० दश हजार वर्षसम्म संसारमा विष्णुका नाम प्रशंसा गरिरहनन् । लोकहरूले ५००० पाँच हज्जार वर्षसम्म भागीरथी गंगाको माहात्म्य रहला । २५०० पचीस सय वर्षसम्म ग्रामविषे स्थापना गऱ्याका देवताहरूका द्वारले भुक्ति मुक्ति पाउन सकुन् ।

## सच्छिप्त वर्णन ※

यो नेपाल देवपुरी हुनाले भविष्यपुराणका श्लोक प्रमाणभन्दा अधिकवर्षपर्यन्त फलदायक नेपालपुरी हो । बत्तिस ३२००० हजार कलिवर्षसम्म बागमतीका माहात्म्य रहन्या छ भन्न्या वचन शास्त्रमा कह्याको छ । आदिदेखिको संक्षेप वर्णन एक लाख १००००० वर्षसम्म पृथ्वी जलामय अब्धिभूत भै रहँदा ब्रह्मा र विष्णुको विवाद हुँदा ती दुइका मध्येबाट ज्योतिर्मय लिङ्ग मूलदेखि ब्रह्मपर्यन्त एकै ज्योति भै प्रकट हुँदा वाणी भयाको श्लोक

मय्येव सकलं जातं मयि सर्वं प्रतिष्ठितम् ।
मयि सर्वं लयं यान्ति तद्ब्रह्मास्म्यहमद्वयं ॥

लक्ष्यण रूपका वाणी भै सृष्टि स्थितिको भारा पाई संसार रच्या । त्यहाँ उप्रान्त धेरै कालपछि सत्य युगका हजार वर्षं १००० शेष रहँदादेखि २०००० बीस हजार वर्षसम्म देवताहरू आउंदै वरदान पाई दिवपाल भै गया । फेरि दुइ हजार २००० वर्ष सम्म सुवर्णमय सत्यवती पुरी देवताहरूले राज गऱ्या उप्रान्त ज्योतिर्मयलिङ्ग गुप्त भै जाँदा देवताहरूले छाडी आप्ना स्वस्थानमा गया ।
यहाँ उप्रान्त तपोवन भै गया । उप्रान्त ज्योतिरूपेश्वर मृगरूप धारण गरी धेरै कालपर्यन्त वन विहार गरी देव दैत्य सिद्धदेखि गुप्त भै रहंदाभया । हर नभै संसारको शोभा छैन भनी खोजी हिंड्दा ब्रह्मा इन्द्रादि देवताहरूले पार्वतीका उपदेश पाई मृगकन चिन्हीशृङ्गग्रहण गर्दा भविष्यवार्ता हरिणेश्वरबाट प्रसन्न भै क्रिया समाप्त भयाको छैन स्वर्ग आउनको मेरो इच्छा छैन भनी अन्तर्धान भै फेरि मृग रूपमा रही विहार गर्दाभया । यहाँपछि ब्रह्मा विष्णु इन्द्रका हातको शृङ्ग स्वर्ग मर्त्य पातलमा स्थापना गऱ्या । यहाँपछि म्लेच्छ किरातीहरू आई दश हजार वर्षसम्म राज्य गरिरहँदा समय कामधेनु आई दूध चढायाको देखी म्लेच्छहरूले पनि हेर्दा ज्योतिलिङ्ग फेरि प्रकट भया र तो सब म्लेच्छहरू लिन भै गया र त्रेतायुगका अन्तरमा १००० एक हजार वष शेष छंदा ब्रह्मा विष्णुबाट धर्मदेखि रहित भयाका म्लेच्छहरू सहजमा लीन भै तऱ्या तसर्थ उनय भयो भनी आई आरतीमध्ये घृत दीप बलिरह्या झैं प्रकट भै रह्यामा सुवर्णका पद्मकर्णिकामध्ये पारा मणिमय ज्योतिलिङ्गमाथि स्थापना गर्दाभया । फेरि विष्णुबाट पनि पंचव्यूह

---

※ माथि वर्णन गरिसकेको कुरालाई यहाँ फेरि संक्षेपबाट वर्णन गरिएको छ ।

मूर्ति इन्द्रनील मणिका लिङ्ग बनाई उसमाथि स्थापना गर्दाभया । यहाँ उप्रान्त बृह्मा विष्णु शिवात्मक लिंग भै गया । इन्द्रादिहरूबाट शिवलिग बनाई आफ्ना आफ्ना नामले नेपाल क्षेत्रमा स्थापना गरिरहदाभया ।

यहाँ उप्रान्त दोलागिरिमा गरुड़नारायण प्रकाश भया । आदिगणेश पनि नैऋत्य कोणमा प्रकाश भया । यस्ता तरहसंग स्थापना भै धेरै देवता प्रकाश भया । मणिमय सुवर्णादि लोप भैगया तपोवन भै रहंदा फेरि विश्वकर्माले स्वर्णपुरी बनाईदिदा द्वापरान्तमा देवताहरूले वास गरिरहँदाभया। तपोवन भै सकियापछि हुन्या अघि तपोवन पर्यायमा हरिणेश्वरबाट भविष्यवाणी भयामाफिक तपो वन विहार समाप्ति भयापछि द्वापर युगका शेष बाँकी वर्ष ३०००० तीस हजार मध्ये चौध हजार वर्ष सम्म अगम स्थान भै राज्य कर्ता राजा शून्य भै रहंदा चतुषष्ठि लिंगहरूका प्रति प्रभाववृद्धि भै ऋषि मुनिहरूले सिद्धि वर पाउँदा फेरि कोही कोही ब्राह्मणादि चतुर्वर्ण म्लेच्छहरू धर्मात्माहरू पापात्माहरू नेपालमा पुगी ईश्वर ईश्वरीका अनुग्रह पाई उद्धार भै गया। रुक्ष नामा किराती पनि नेपाल पुण्य भूमि वाग्मतीमा प्राणत्याग गर्नाले कान्तिपुरका राजा भै जन्म लिन गया । नेपाल भूमिमा विश्वकर्मा आई स्वर्णपुरी बनाईदिदा मुक्तिसोपानपुरी भै गया र इन्द्रादि देवताहरू आई स्वर्णपुरीको भोग गरिरहँदासमय रुक्षनामा किराती मरी काशीदेशका राजा हुन्या राजा आई धर्मदत्त नाम पाई गुहेश्वरीका अनुग्रहले वर प्रसाद पाई देवताहरूकन हराई एक हजार १००० वर्षसम्म स्वर्गपुरीका राज्यभोग गरी शिवलोकमा गमन गऱ्या । उप्रान्त फेरी देवताहरू आई वास गरी स्वस्वस्थानमा गया । त्यहाँ उप्रान्त केही कालपछि महेन्द्रदमन नाम दैत्य आई सुप्रभा पुरीका राज्य एक हजार १ ०० वर्षसम्म राज्य गरिरहंदा समय अघि हरिणेश्वरबाट नेपाल तलाउ भै जान्या छ भन्न्या भविष्यवाणी प्रमाण प्रभावतीकन जल विहार गर्नानिमित्त १६ वर्षसम्म वाग्मती थुनी ह्रद गरी राख्दा प्रद्युम्नका सहायनिमित्त आयाका श्रीकृष्णबाट सेतुबन्ध काटी जलप्रवाह गराया । ह्रद हुंदा अघिका पुरीहरू बिग्री सुप्रभा पुरी उजाी मणिमय सुवर्णादि लोप भै गया । केही कालपछि नेमुनि गुरु पाई विरूपाक्षले तीर्थ यात्रा गऱ्या । उप्रान्त म्लेच्छहरू आई वास गऱ्या । ग्रामहरू पनि बन्या । तीस हजार ३०००० वर्ष सकियापछि तीन हजार ३००० वर्ष लाग्दासम्म म्लेच्छ राजा होला भन्न्या वाणी भै ईश्वर किरातरूपले विहार गऱ्या । एक हजार १००० वर्ष पछि किरात रूप शिवसंग पार्वतीको भेट भयो । फेरी किरातीकन वैशालाधिप राजाले जय नगरून्ज्याल यही रूप रहुंला भनी आज्ञा भै सोही रूपमा विराज मान भया ।

द्वापरयुगका शेष एक हजार १००० वर्षपछि श्रीपशुपतिनाथ प्रकाश भया । नेमुनिले अघि नेपालकन पालन गर्नु भन्न्या ईश्वरीका वाणी भयाका हुनाले नेमुनिका नामले गरी नेपाल

नाम हुन गयो ।

कृते सत्यवति यत्र त्रेतायां तु तपोवनम् ।
द्वापरे मुक्तिसोपानं कलौ नेपालिका पुरी ॥

सत्ययुगमा सत्यवती पुरी त्रेतामा तपोवन भै रह्या । द्वापरमा मुक्ति सोपान भै गया । कलिमा नेपालपुरी भनी नाम प्रख्यात भै गया ।

## वज्रयोगिनीबाट नेमुनिलाई वरप्रदान

राजभोगमालावंशालीक्रमः लिख्यते । क्रमेण वर्तमाने कलियुगे समस्तभूपालमौलिमालाललित चरणाम्बुजस्य राज्ञः श्रीमत्पृथ्वीराजस्य हिमवच्छैलमध्ये वर्त्तिनो महारथस्य संभूतमण्डलस्य राज समये भृङ्गीश्वरभट्टारकः प्रादुर्भावस्तदनु गौतमादिऋषिगणैस्तत्र गौतमेश्वरादयो देवाः प्रतिष्ठाकृताः अथानन्तर भृङ्गीश्वरभट्टारकः श्लेष्मान्तकवने विराजते स्म । नेपनामा गोपालस्तस्य च कपिला गौ वाग्मतीतीरे गता । तया स्वक्षीरधारया सिक्ते भूप्रदेशे श्रीमत्पशुपतिः प्रकाशितः । तेन नेपनाम्ना गोपालेन श्रीमत्पशुपतिः प्रतिष्ठाकृतः । ततः परं गोपालवंशैः राज्यं भुक्तम् ।

यो हिमवत् शैलमध्यका नेपालभूमिमा तलाउ भै जाँदा नगर पुर ग्रामहरू पनि पानीलें छोपिरह्याको थियो र श्रीकृष्णबाट सुदर्शन चक्रले सेतुबन्ध काटिदिया र जलप्रवाह भैगया ।

त्यहाँ उप्रान्त अघिका देवताहरू मृत्तिकाले पूर्ण भै छोपिन गयाका थिया । केही कालपछि मालागात नाम गोग्रासबाट नेप नाम गोपालको बहुदि नाम कपिला गाई वाग्मतीतीरमा प्रतिदिन जाई उसीर पुंज मृत्तिकामाथि क्षीरधारा बहाँई चढाउँन जाँन थिइन् । एकदिन गाइ खोज्न जाँदा नेप गोपालले देखी क्या कारणले यस स्थानमा दूध चढाउँछिन् ? केही कारण निश्चय होला भनी त्यस स्थानमा खनी हेर्दा ८४३ वर्ष द्वापर युगका शेष बाँकी छँदा श्रीमत्पशुपतिभट्टारक शिव प्रकाश हुँदाभया । पूर्वकालमा नेमुनिलाई नेपालकन पालना गर्नू भन्या वाणी श्रीज्योतिस्वरूपेश्वरबाट र श्री वज्रास्यादेवीबाट आज्ञा प्रसन्न भयाको केही प्रमाण

त्वं सिद्धो भव रूक्तज्ञ अनेन तनुना स्वयम्
अद्यादि क्षयपर्यन्तं तगे मयि प्रलीयसे
त्वं च पालय हे वत्स इमं स्थानं निरन्तरम्
वरं पशुपते क्षेत्रं धर्मेण धर्मरक्षितम्
ततो लोके वदिष्यन्ति तेभिधानेन सन्ततम्

श्रीवज्रयोगिनीबाट नेमुनिकन वर प्रसन्न भयाको हे पुत्र सिद्ध भयौ । संसारमध्ये उत्तम मेरा भक्त हौ । अनेक (रूप) आसनादिले गरी अद्यादि क्षयपर्यन्त बसी अन्तमा मविषे लिन होला । हे पुत्र क्षेत्र मध्ये वर भयाका पशुपति क्षेत्रमा निरन्तर रही धर्मले धर्म रक्षा गर तिम्रा नामले गरी नेपाल भनी

संसारमा प्रख्यात हुन्याछ।

त्रैलोक्यानां गरिष्ठोयं नेपाल इति सर्वदा
नित्यं पशुपतिं तत्र समभ्यर्च्य सुभक्तितः
स्थित्वा तत्रैव सम्यक्त्वं एतत् क्षेत्रं नु पालय
ततः कालान्तरे भूयस्तद् क्षेत्रं बहुवत्सरं
वाग्मतीजलसंपूर्णह्रदभूतं भविष्यति

त्रैलोक्यमा गरिष्ठ भयाका नेपाल भनी प्रख्यात भयाका स्थानमा नित्य पशुपतिकन सुभक्तिले अर्चन गर। त्यसै क्षत्रमा बढ़िया तरहसंग बस। केही कालान्तरमा त्यस क्षेत्रमा केही वर्षसम्म वाग्मतीका जलले पूर्ण भै ह्रद भै जान्याछ। यस्ता प्रकारसंग नेमुनिले नेपालह्रद नहुँदै यस क्षेत्रमा कर्ता भै पालन गर्नू भन्न्या वाणी वज्रास्यादेवीबाट वर प्रसाद पायादेखि मुनिका मध्ये मुख्य भै उपदेश कर्ता भै नीतिको चर्चा भै रह्याका थिया। फेरि श्रीकृष्णबाट सेतुबन्ध काटी जलप्रवाह गराया। त्यहाँ उप्रान्त श्रीपशुपतिका स्थानमा जाई पूजामान्य गर्दासमय श्री पशुपतिनाथ प्रकट भै कृष्णकन दर्शन दिंदा मुनिगणको मध्यमा रह्याका नेमुनिबाट एक हात उठाई हरि हरका भेदछैन भनी नाना प्रकारका वर्णन गरी स्तुति गर्दा श्रीपशुपतिनाथ प्रसन्न भै हे नेमुनि यस मेरा क्षेत्रकन तैंले धर्मले परिपालना गर्नू। तेरा नामले गरी कलियुगमा नेपाल भनी नाम प्रख्यात हुन्याछ भन्न्या वाणी श्रीज्योतिरूपेश्वरबाट पाया।

## नेमुनिलाई धर्मराजको उपदेश

त्यहाँ उप्रान्त नेपालकन धर्मले पालना गर्नानिमित्त नीतिको विचार गर्दाको संक्षेप प्रमाण— सत्ययुगमा महादेवबाट, त्रेतायुगमा विष्णुबाट, द्वापरयुगमा इन्द्रबाट, कलियुगमा धर्मराजबाट धर्माधर्मको विचार गरीकन फल शासनाको आज्ञा दन्छन्। नीतिका प्रबन्ध प्रथम ब्रह्माले स्थिति गरी विश्वकर्मालाई कार्यको भारा दी पृथ्वीमा वेदका गतिले स्मृति बसाया। त्यहाँ उप्रान्त वैवस्वत मनु राजाबाट मनुस्मृति बनाई नाना प्रकारका प्रबन्ध चलाया। जम्बूद्वीपमध्ये हिमवत् क्षेत्रमा स्थिति बसाउनानिमित्त नेमुनिबाट धर्मराजलाई जाई विन्ति गर्दाको केही प्रमाण —

धर्मराजस्थिते (देशे) सुचिरं तिष्ठ देहिनाम्
विना न्यायविचारेण ग्रामवृद्धिः कदाचन

हे धर्मराज कस्ता स्थानमा तिमि वास गर्छौ भनी धर्मराजले स्थित गर्‍याको देशमा बढ़िया तरहसंग देहले सुस्थिर गति पाउँछ। विना न्यायको विचारले ग्रामहरूको वृद्धि कदाचित् हुँदैन —

न्यायशास्त्रविचारेण स्थिति मित्याह कारणम्

न्याय शास्त्रको विचार भन्याको केवल स्थिति गर्न कारण निमित्त हो भनी नाना प्रकारसँग विन्ति गर्दा धर्मराजबाट आज्ञा गर्दछन् –

एवमेव यशः प्राहुः सत्यं स्मृत्वा गतोऽस्म्यहम्
मन्त्रयुक्तं शुचिर्भूतं धर्माधर्मविचक्षणम्
स्वामिनो ह्यिजतुश्यस्य भीतिर्नैव कदाचन
तस्य देहमहं गत्वा नान्यथा रमते मनः

बढिया कुरो प्रश्न गर्न आयौ सुन, सत्यवाचा स्मृति गतिमा रहन्या मन्त्रले युक्त भै शुची भै रहन्या धर्म अर्थको विवेक भयाका स्वामीका अधीनमा रहन्या धर्मज्ञ भयाका यस्ताकन कदाचित् भय प्राप्त हुदैन । त्यस्ताका देशमा म आफै वास गर्दछु । अरु प्रकार धर्मले रहित भयामा सुस्थिर हुदैन भन्या नानाप्रकारका नीति बोध नेमुनिले धर्मराज बाट सुनिसक्या उप्रान्त स्वस्थानमा जाई बस्या । फेरि ब्रह्मादेखि वर पायाका देवताहरुले मान्य गर्‍या ।

## नेपालका पर्वतहरूको नाम

हिमालय पर्वतसहित नेमुनिले चर्चा गरी राख्याका पर्वतहरू १०० छन् । तिनकन भूधर राजा कहन्छन् । ती पर्वतहरुमध्ये हिमालय उशीर बीज पर्वतका दक्षिणभागका पर्वतहरू छत्रक उज्जयन्त, कातुन्द, चित्रहद, सुह्रद, केतुमान् मणिमान् (गोमान्) काभीर, धेनुमान्, सुनाभ, (चक्रनाभ) व्याघ्रवान्, पुष्पक, वैरण, सुनेमि, श्यामाक, वृषभ, चक्र, द्रोण, काकन्द ककुद, स्कन्द, कुब्ज, निकुञ्ज, सुकुन्द, खण्डव, शिवकूट, सुवेल, पारियात्र, मृगेन्द्र, मुञ्जवान् सिद्धाश्व, दोलागिरि, मणिधातु, चन्द्रवान्, सिद्धाचल, पुण्यवान्, कालगिरि, ऋष्यवान्, सर्वौषधि, विशालाद्रि, चन्द्रगिरि आदि इ पर्वतहरु स्वर्गसोपान हुँन्.

## गोपाललाई नेमुनिको उपदेश

नेपालहृद खोलिया उप्रान्त ने नाम गोपालले श्रीपशुपतिनाथ प्रकाश गर्‍या उप्रान्त उही वर्षमा अधिको आज्ञा पुर्‍याउनानिमित्त नेमुनिबाट धर्मशास्त्र स्मृति प्रमाण नीति गतिले पालन गर्न बिना राजाले प्रजाको स्थिति हुदैन भनी विचार गर्दाभया ।

मनवालमहार्थं च भाषा शंकरगह्वरम्.
नेमुनिालवालं च नेमुनीति महोत्तमम्

नीतिधि हर नीवाल नेवालं नेमुनिप्रुट
नवालजाग्निभूसाक्षात्सोहं बालोत्तमं स्मृतम् ।

मनवाल नेवाल नीवाल नवाल यति चार नाम भाषा यो शंकर गह्वरविषे मनवाल महार्थले युक्त भयाका नेमुनिले पालन गर्दा नेपाल भनी प्रख्यात भया । त्यसै नेपालमा नेमुनिले पुत्रवत् पालना गऱ्याकालाई नेवाल कहन्छन् । हरका उक्ति प्रमाण नीति ज्ञानले युक्त भै रह्याकाकन नीवाल कहन्छन् । केवल अग्निदेखि भयाका नेवाल जो छन् सो साक्षात् हरसुन कुमार हुन् । यी चार नेवाल उत्तम कह्याका छन् ।

महामुक्तनयी मूर्ति नरं च निरभिश्वरं
बाल्यावस्था सदा काले लक्ष्मी श्री नेमगह्वरि

महामुक्त भई भूमिविषे नररूप भै नरका ईश्वर भयाका ईश्वर ईश्वरीका अनुग्रहले सदा बाल्यावस्था भैं श्रीनेमगह्वरविषे रहेका मनवाल महार्थपदले युक्त भयाका नेमुनिबाट "विना न्यायविचारेण ग्रामवृद्धिः कदाचन" विना नीतिका विचारले ग्रामको पनि कदाचित् वृद्धि हुदैन भनी धर्मराजसँग सिकी आयाका नीतिका गति अनुसार विना नीतिले पुर नगर ग्राम नर पशु पन्छि बृहि इत्यादि केही प्रकारको पनि वृद्धि हुदैन भनी विचारमा ठहराई राजाको स्थिति नेपालमा बसाउनानिमित्त गोपालका जातका मानिस कलि प्राप्त हुदा कलिको राजा हुनु छैन भनी ठहर गर्न्या गोपालकन बोध दी शास्त्रका प्रमाणसित राज्याभिषेक दी आफूले ईश्वर ईश्वरीबाट दियाका नेपाल पालना गर्नू भन्न्या भारा सौंपी उपदेश दिया । मन्त्रले युक्त भै मन्त्रयुक्त गराउनू शुची शौच व्रतमा रहनू राख्नू धर्माधर्मको विचार गर्दै रहनू । गर्नू गराउनू । स्वामीका अधीनमा रहनू राख्नू र त्यसका शरीरमा धर्मको स्थिति भै धर्मचेष्टा भै मन शुद्ध भयाका मानिसकन सुस्थिर गति पाई इहत्रमा भुक्ति परत्रमा मुक्ति पाउन्या छन् । अन्यथा कदाचित् स्थिति हुदैन भन्न्या आदि नाना नीति धर्म ज्ञानका बोध दी शास्त्रका प्रबन्धले गरी ब्राह्मणादि वर्णकन स्वस्वधर्मले नेम निष्ठामा राखी श्रीपशुपतिक्षेत्रकन पालननिमित्त राजाको स्थिति गतिमा राखिदिदाभया ।

## गोपालवंशीराजा हरूको राज्य

द्वापरयुगका अन्त कलि प्राप्त हुन लाग्दासमय जम्बूद्वीपमध्ये महाचक्रवर्ती महाराजा श्री युधिष्ठिर धर्मराज हुंदाभया । नेमुनिबाट नेपालक्षेत्रमा स्थापना गऱ्याका श्रीराजा भूमागत १ अरय भोग वर्ष ८४ इन राजाले नेमुनिबाट उपदेश पाया अनुसार नीति धर्मले नेम निष्ठामा रही

श्रीपशुपतिनाथकन अघिका मूर्तिमाथि द्वितीय मूर्ति सुप्रतिष्ठा गरी अग्निशर्मा ब्राह्मणकन अर्चन–कारि बनाई वैशाख शुक्ल ३ रोहिणी नक्षत्र सौभाग्य योग आदित्यवारका दिन महास्नानादि कर्म गरी नित्यपूजा आरम्भ गरी यसै अक्षयतृतीयादेखि श्रीपशुपतिनाथकन नित्य नैमित्य विधिपूर्वक अर्चन गराया । इन राजाका पालामा श्रीपशुपतिनाथ प्रकाश भै श्लेष्मान्तक वनविषे नित्य किरातरूपले विहार गरिरहँदा भयाका थिया । इन राजाले ईश्वर ईश्वरीको सन्मान गौको पालन प्रजाकन प्रतिपालन गरी परम आनन्दसित राज्यभोग गरिरह्या ।

अस्य पुत्र श्रीराजा जयगुप्त १ भोगवर्ष ७३।३ अस्य पुत्र श्री राजा परमगुप्त १ भोगवर्ष ८१ अस्य पुत्र श्रीराजा हर्षगुप्त १ भोगवर्ष ६७ अस्य पुत्र श्रीराजा भीमगुप्त १ भोगवर्ष ३८ अस्य पुत्र श्रीराजा मतिगुप्त भोगवर्ष ३७ अस्य पुत्र श्रीराजा विष्णुगुप्त १ भोगवर्ष ४६ यति सात पुस्ता गोपाल राजा–हरूले मातातीर्थ समीपमा ठूलो गौशाला बनाई देवताहरूकन भक्तियुक्त सन्मान गरी गो ब्राह्मण प्रजाकन नेमुनिका उपदेश प्रमाण नीतिमार्गले प्रतिपाल गरी आनन्दसित राज्य भोग गरिरह्याका थिया ।

## नेमुनिको उपदेश छाडी बौद्धमार्गी हुँदा यक्षगुप्त राजा निःसन्तान

अस्य पुत्र श्रीराजा यक्षगुप्त १ भोगवर्ष ७१ इन राजाका पर्यायमा अघि स्मरण तीर्थविषे तपस्या गरिरह्याका दानवहरूकन विष्णुबाट शाक्यसिंह नाम बुद्धावतार धारण गरी दानवहरूकन बौद्धज्ञान दी बुद्धधर्ममा राखिसक्या उप्रान्त संसारमा बुद्धमार्गको वृद्धि भै आउँदा इ यक्षगुप्त राजाले बुद्धमार्गीहरूको संगत गरी बुद्धमार्गमा रहनको इच्छा गर्‍या र बुद्धमार्गी भै आफ्ना पुर्खाकन नेमुनिबाट उपदेश दी राजगद्दि(गद्दी)मा प्रतिष्ठा गरिदियाको स्वधर्म मार्ग छोड्दा इन राजाको सन्तान नभै राजगद्दि छुट्न लाग्दा मध्यदेशका महिषपाल अहीर गोपालकन झिकाई राज्याभिषेक दिया । आफू मनमा विषाद गरी आर्यघाटमा यक्षगुप्त राजाले प्राणत्याग गर्‍या । यति ८ गोपाल राजाहरू नेमुनिबाट राजगद्दि दी स्थापना गर्‍याका राजाका सन्तान हुन् ।

## महिषपालवंशी राजा

इनका जम्मा भोगवर्ष ५०७ मास ४ गोपालका अन्तका राजा यक्षगुप्तले धर्मपुत्र पालना गर्‍याका राजा श्रीवरसिंह भोगवर्ष ४९ अस्य पुत्र श्रीराजा जयमतिसिंह भोगवर्ष २१।७ अस्य पुत्र श्रीराजा भवनसिंह भोगवर्ष ४१ र तीन पुस्ता महिषपाल राजाहरूले यक्षगुप्तका उपदेशमाफिक प्रजा प्रतिपाल गरी राज्य भोग गर्‍याका थिया । नेमुनिका उपदेश अनुसार इनीहरूले धर्म मार्गको रीत चलाउन सक्याको थिएन । यी तीन पुस्ता महिषपालका जम्मा भोगवर्ष १११।७ गोपाल र महिषपालका

जम्मा भोगवर्ष ६१८।११

## किरातेश्वरको उत्पत्ति

यहाँ उप्रान्त श्रीपशुपतिनाथबाट अघि तीस हजार वर्षपछि दुई हजार वर्ष २००० कलि लाग्दा म्लेच्छ राजा हुन्याछन् भन्न्या वाणी अनुसार कलि प्राप्त हुँदासमय नेपालमा राजा हुन्याहरू थोरै द्वापर युगका शेष छँदा पूर्व दिशादेखि महाप्रतापसँग आई महिषपाल राजासंग युद्ध गरी जिती नेपालका राजा भया। प्रथम किरात राजा श्रीयलम्ब भोगवर्ष ९० इन राजाका पर्यायमा अघि पूर्व कालमा कैलाशशिखरविषे सभाका मध्ये श्रीमहादेव विराजमान भै रहँदा अकस्मात् पार्वतीदेखि रहित भै गुप्तरूपसँग किराती भेष गरी आफ्ना मायाले कसैले थाहा नपाउन्या गरं श्रीमहादेव किराँतरूप भै श्लेष्मान्तक वनमा किराती गणले सेवा गराई विहार गर्दथ्या। पार्वतीले हरकन खोजी हिड्दा समय हजार वर्ष बित्यापछि पार्वतीले हरको चरित्र बुझी उस्तै रूपको धारणा गर्नको इच्छा गरी किरातीरूप धरी जांदा महादेवकन मोह गराइन् र अति सुन्दरी किरातिनी रहिछ भनी पार्वतीकन अङ्कमाल गरी प्रीति गरिरहँदाभया ।

फेरि केही कालपछि दुवैसहित भै किरातेश्वर शिवलिङ्ग स्थापना गरी आफैले पूजा गरी किराती किरातिनी जस्तै भै सेवा गरिरह्या। यहाँ ब्रह्मा विष्णु इन्द्र प्रभृति देवताहरूले गुह्येश्वरी स्थानमा जाई शंकर यसै जगामा छन् भनी जाननिमित्त ६ मैनासम्म तप गर्दा कार्तिक शुक्ल ९ का दिन ईश्वरी प्रसन्न भै आज्ञा गर्दिमइन्। भो ब्रह्मा विष्णु इन्द्र अमरहरू सुन शंकर यही मेरा क्षेत्रमा किरातरूपले विहार गर्दछन् भन्न्या वाणी ईश्वरीदेखि पाई देवताहरूले उसै स्थानमा खोज्न जाँदा किरातरूप शंकरकन देख्नेबित्तिकै चिनी सबै देवताहरूले हातमाला गरी रोवदा किरातरूपविषे विराजमान भयाका महादेव प्रसन्न हुंदा उसै अवसरमा किरातेश्वरी पनि आइपुगिन् र श्रीशंकरबाट देख्नेबित्तिकै अङ्कमाल गरी देवी हुन् भनी जानी मुखकन हेरी तिम्रा प्रसादले यी देवताहरूले मकन चिन्या भनी ब्रह्मा विष्णु इन्द्र आदि देवताहरूकन केही वचन बोल्दाभया। फेरि हजार वर्ष सम्ममा वैशालाधिप किरातकन जय गर्न्या राजा नहुन्ज्याल यही स्वरूपमा पार्वतीले सहित भै विहार गर्दछु भनी रहँदाभया। त्यहाँपछि देवताहरूबाट हरकन स्वर्गविषे लैजान नसकी आफ्ना आफ्ना स्थानमा जाँदाभया ।

## अर्जुन र किरातेश्वरको युद्ध

केही कालपछि पञ्च पाण्डवहरू वनवास गरिरहदा समय युधिष्ठिरका उपदेशले तीर्थयात्रा गर्नानिमित्त अर्जुन दाज्यूहरूसँग विदा भै नेपाल क्षेत्रमा आयाका थिया। तिनकन किरातीहरूले देखी अर्जुनले धनुर्धारी आयाको देखी हे रुँगी आऊ हामीहरूसँगै बसी खान्याकुरो खाऊ भनी किरातीहरूले

बोलाउँदा अर्जुन बहुतै रिसाई म क्या तिमीहरूसँगै बसी खान भनी आयाको हुँ ? पात्र अपात्र पनि विचार नगर्न्या बानरहरू बिकरहरू जस्ता तिमीहरूसित संग बसी खान्या जात हुँ हामी ? भनी उत्तर दिंदा किरातीहरू रिसाई भन्न लाग्या । शस्त्र धाऱ्याको छु शूरो छु भनी हाम्रा वचन लंघन गर्न्या हे मूर्ख भनी धेरै जनाले नाना तरहसँग ह्क्काउँदा अर्जुन बहुतै क्रोध भै गाण्डीव धनु टंकार शब्द गरी सर प्रहार गर्न तैयार भया । किरातीहरूले पनि धनु टंकार शब्द गरी सर प्रहार गरी युद्ध गर्दा परन्तु किरातीहरूकन अर्जुनले हटाउँदा किरातहरू किरातशंकरसँग शरणमा जाँदा किरातरूप शंकरबाट पनि पिनाक धनु हातमा ली अघि सरी अर्जुनसँग युद्ध गऱ्या । परस्पर सर प्रहार गरी युद्ध गर्दा अर्जुन बहुतै परिश्रम भै केही वचन बोल्न लाग्या ।

## अर्जुनलाई किरातेश्वरबाट वरप्रदान

हे किराती मेरा वचन सुन, मेरा दाज्यूको उपदेशले तीर्थयात्रा गरूं भनी आयाको हुँ । अहिलेसम्म मैले स्नानादि कर्म गरी हरकन अर्चन गर्न पायाको छैन । शम्भुका पूजा गरी नसकुञ्ज्यालसम्म युद्ध थामिदेऊ भन्दा अर्जुनका यस्ता वचन सुनी मसंग बराबर युद्ध गरी अरू फेरि युद्ध गरुँला भनी इच्छा गऱ्या भनी किरातरूप शंकर प्रसन्न भै बडा तेजस्वी रूप भै केही वचन बोल्दाभया । यदि तिमीले ईश्वरका पूजा गर्छौं भन्यौ त अर्चन गरि हाल क्या होला । फेरि पछिबाट युद्ध गरुँला भनी किरातरूप शंकरले आज्ञा गर्दा भया । अर्जुनले धनुर्वाण भूँमा छाडी शिवलिंगकन प्रदक्षिणा गरी अर्चन गर्न सामग्री तयार गरी किरातरूप शंकर अदृष्ट भै गया । अर्जुनले सामग्री तयार गरी हरकन अर्चन गरिरहँदा तिनै किराती रूप शंकरबाट हररूप धारी अर्जुनका पराक्रम भक्तिभाव देखी खुशी भै रहँदा अर्जुनले दर्शन पाई भूमिमा दण्डवत् प्रणाम गऱ्या ।

त्यहाँपछि अर्जुनले किरातरूप धारण गरी मसँग युद्ध गर्दा इनै शंकर रह्याछन् भनी जानी मेरा अपराध सबै क्षमा गर भनो नाना प्रकारसँग प्रार्थना गर्दा किरातेश्वर शंकर प्रसन्न भै वाग्मतीका तीर्थ यात्रा गर्न आयाका हे अर्जुन ? तिम्रा पराक्रमले स्तुति भक्ति भावदेखि म बहुत प्रसन्न भयाँ क्या वर माग्छौ माग भनी आज्ञा प्रसन्न हुंदा अर्जुनले अञ्जलि जोरी हे परमेश्वर शंकर सर्वज्ञ मैले सेवा गरियाका मेरा वेदना आफूलाई मालुमै छ भनी दुर्योधनले दुःख दी वनवास गरायाको कौरवहरूले छली जिती निकाल्या कामकन चाहिंदो वर प्रसन्न हवस् भनी विन्ति गर्दा किरातेश्वर आज्ञा गर्दछन् ।

हे अर्जुन केही कालपछि यस्तो हुन्याछ कि जस्तो तिम्रो हृदयका कामना छ । मेरा प्रसादले गरी तिम्रै जय हुन्याछ अब क्षत्रिय तीर्थमा स्नान गरी जाऊ भनी प्रसन्न भै धनुर्विद्या सिकाई वर प्रसन्न भै अन्तर्धान भै जाँदाभया । ईश्वरका अनुग्रह आज्ञा प्रमाण अर्जुनले शिवलिङ्गकन परिक्रम गरी श्रद्धा भक्ति

राखी क्षत्रीतीर्थमा स्नान गरी चाँडै गमन गरी आफ्ना दाजुभाइ रहयाका स्थानविषे जाँदाभया ।

## कुरुक्षेत्रको युद्धमा किराती राजाद्वारा सहायता

नेपालक्षेत्रमा श्रीमहादेवले किरातरूप धारण गर्नालि किरातीहरूको प्रतापवृद्धि भै नेपालमा यलम्ब–नाम किरातीले राज्य भोग गरिरह्या । अस्य पुत्र श्री राजा पंवी भोगवर्ष ७९।३ इन राजाले राज्य गरिरह्याका थिया । यस्तै समयमा पाण्डवका कौरवसँग कुरुक्षेत्रमा युद्ध हुन लाग्दा किराती पंवी राजाले आफ्ना सैन्य समूह गरी अर्जुनका हुकुमले युद्ध गर्न गया । अस्य पुत्र श्रीराजा धस्कन भोगवर्ष ३७ अस्य पुत्र श्रीराजा बलंब भोगवर्ष ३१।६ इन राजाले राज्याभिषेक भयाप्रान्त १९ वर्षपछि २३ वर्ष भोग सवदा कलियुगका पादले पृथ्वीमा स्पर्श गर्न्याको ५ वर्ष लाग्यो भनी चारै दिशाका ब्राह्मण ज्योतिष पण्डितहरू आई राजगृहमा सुनाउन आया ।

यहाँ उप्रान्त सर्वत्र जहाँ तहाँको मनुष्य जीवजन्तु सव प्राणीकन पाप चेष्टाले संयुक्त भै गया यहाँदेखि अवि नेपाल पुरीमा देवताहरूको दर्शन स्पर्शन वारंवार पाइन्या द्वापर युगका शेषभित्र हो कलियुग लागिसक्या, उप्रान्त पनि किराती राजाका पर्याय नसकुन्ज्याल महादेव किरात स्वरूपमा विराजमान भयाका थिया । कोही कोही जनले दर्शन पाउँदै गदथ्या । कलियुगचरणत्रिपादमध्ये अनेक पादैन स्पर्श जान अस्य हिन्ति राजा भोग वर्ष ४१।३ इन राजाका पर्यायमा अघि पूर्वकालमा वशिष्ठ मुनिबाट आज्ञा भयाको भविष्य भै गयाको संक्षेप कहिन्छ ।

## ब्रह्माद्वारा महामारी विसूचिकालाई वरप्रदान

हिमालय पर्वतका उत्तर भागमा कज्जपंक नाम पर्वतका गुहाविषे कर्कटि नाम राक्षसी अति हरला–ग्दी मुख भयाकी पापात्मा दुष्ट चेष्टा भयाकी वास गरिरह्याकी थिइ । कैले पनि तृप्ति भोग नपाई भुखले पीडित भयाकी बडवानलसम जिह्वा भयाकी राक्षसीले मनमा चिन्तना गरी । जम्बूद्वीपमा रहयाका मनु–ष्यादि प्राणीकन भक्षण गर्न समर्थ हुन्या कार्यसाधना गर्नुपर्न्यो । अब मैले तपस्यै गरु भनी ठहराई भूतदेखि दुर्गम भयाका पर्वतमा जाई तीर्थमा स्नान गरी एक गोडाले टेकी एक चित्त गरी हजार वर्ष तपस्या गरिसवदा यस्तो उग्र तपस्या गर्याको देखी प्रसन्न भै ब्रह्मा आई प्राप्त हुंदा राक्षसी विन्ति गर्छे । हे भगवन् सजीव सूचिका भै प्राणीका शरीरविषे प्रवेश गरी रोग विधि गराई मारी नर नारी प्राणीकन खान पाइन्या वर प्रसन्न गर्नुहवस् भनी विन्ती गर्दा ब्रह्माबाट तथास्तु तेरा मनले कामना गर्न्यामाफिक जीवसूचिका भै रोग प्राप्त गरी प्राणीकन मारी भक्षण गर विसूचिका भनी तेरा नाम संसारमा प्रख्यात हुन्याछ । परन्तु यस मन्त्र पढी जल शोधन गरी सिञ्चन गर्दा

त्यस रोगीकन रक्षा गर्नू भन्न्या वाणी बाधी ब्रह्मा अन्तर्ध्यान भै जाँदाभया ।

त्यहाँपछि कर्कटि नाम राक्षसीले यस्ता तरहको वर पाइसक्यापछि जम्बूद्वीपमा आई नर नारी पशु पक्षी प्राणीकन भक्षण गरिसक्दा पनि त्यस राक्षसीलाई तृप्ति नभै भोक नहराउँदा यस्ता प्रकारसंग तप चर्चा गरी वर पाई पनि यदि भोक नहरायापछि क्या काम लाग्यो अब यस्तो काम गर्न्या छैन । पाप-शुद्धि गर्न मात्र भयो भनी मनमा विचार गरी फेरि पर्वतविषे जाई केही कालसम्म भोककन मारी निराहार गरी निर्विकल्प भै तप गरिरहंदा फेरि ब्रह्मा प्रसन्न भै प्राप्त भया ।

हे पुत्रि तेरा कल्मष पाप सबै नष्ट भै गयो मूढ अनाचार दुष्ट जनकन भक्षण गरी तँलाई पाप छैन भनी बुझाउंदा फेरि राक्षसीले ब्रह्माका चरणमा दर्शन गरी ।

## किराती राजा हन्ति र बिसूचिकाको कुराकानी

त्यहाँपछि फेरि राक्षसीलाई भोकले पीडित गर्दा ब्रह्माका आज्ञाअनुसार फेरि नर नारी आदि प्राणी-कन भक्षण गरी आउंदा आउंदा किरात जनका मण्डलमा पुगी धेरै जन भक्षण गरी आउंदा एक कोही दिन हंति नाम किरातराजा हारयतम नाम मन्त्रीले सहित भै सैन्यसाथ ली सिकार खेल्ननिमित्त वनमा जाई वास गरिरह्याका थिया ।

त्यस ठाउंमा कर्कटि नाम राक्षसीले देखी जङ्गलका बीचमा रात्रीविषे पुगी सैन्यकन जीवसूचिका भै शरीरमा प्रवेश गर्दै मार्दै खाँदै गर्दा सबै सैन्यकन मारिसकी राजा र मन्त्री बाचिरह्याका थिया र त्यस कर्कटि राक्षसीले इनीहरू मूढ छन् कि ज्ञानी छन् भनी विचार गरी ज्ञानवान् ठहराई इनीहरूसंग केही प्रश्न गर्नुपर्न्यो भनी अदृष्ट देह भै राजा र मन्त्रीकन बोलाई ज्ञानका वार्ता हरू सोध्या । राजा र मन्त्रीले मनमा विचार गरी सोध्याका प्रश्न ब्रह्मज्ञानका जवाफ दी चित्त बुझाउँदा कर्कटि नाम राक्षसी बहुतै खुशी हुँदा उसकन खुशी गराई आफ्ना दरबारमा ल्याई पूजा मान्य गरो यस्ता प्रकारको उपाय गर्न्याहरूकन नमार्नू भन्न्या वाचा कबोल गराई खुशी गरी पठाया । यस्ता प्रकारको भविष्य बशिष्ठ मुनिले ब्रह्माको कर्कटि नाम राक्षसीले अघि तपस्या गर्न्यादेखि पछि हुन्या भविष्य वचन अनुसार भै गया । यस्तो वृत्तान्त वशीष्ठ योगका सारमा लेखियाको छ ।

## किरात-राजवंश

संक्षेपले गरी हंति नाम किराती राजाका पालामा भै गया ।

अस्य पुत्र श्रीराजा हुमती भोगवर्ष ५० –

| | |
|---|---|
| अस्य पुत्र श्रीराजा तस्क भोगवर्ष – | ४१।८ |
| अस्य पुत्र श्रीराजा सुयस्य भोगवर्ष – | ३८।६ |
| अस्य पुत्र श्रीराजा पर्व भोगवर्ष – | ५६ |
| अस्य पुत्र श्रीराजा जितेदास भोगवर्ष – | ६० |
| अस्य पुत्र श्रीराजा पंच भोगवर्ष – | ७१ |
| अस्य पुत्र श्रीराजा कैके भोगवर्ष – | ५६ |
| अस्य पुत्र [illegible]राजा स्वनन्द भोगवर्ष – | ५०।८ |
| अस्य पुत्र श्रीराजा थुंको भोगवर्ष – | ५८ |
| अस्य पुत्र श्रीराजा गीघ्रीः भोगवर्ष – | ५९।६ |
| अस्य पुत्र श्रीराजा जने भोगवर्ष – | ७३।२ |
| अस्य पुत्र श्रीराजा लुके भोगवर्ष -- | ६०।१ |
| अस्य पुत्र श्रीराजा थोर भोगवर्ष – | ७१ |
| अस्य पुत्र श्रीराजा थोको भोगवर्ष – | ८३ |
| अस्य पुत्र श्रीराजा वर्मा भोगवर्ष | ७३।६ |
| अस्य पुत्र श्रीराजा गुज भोगवर्ष – | ७२।२ |
| अस्य पुत्र श्रीराजा तुस्क भोगवर्ष -- | ८१ |
| अस्य पुत्र श्रीराजा सुमकै भोगवर्ष – | ५६ |
| अस्य पुत्र श्रीराजा असु भोगवर्ष – | ५८ |
| अस्य  त्र श्रीराजा संग भोगवर्ष – | ६३ |
| अस्य पुत्र श्रीराजा गुनंज भोगवर्ष – | ७४ |
| अस्य पुत्र श्रीराजा खिचु भोगवर्ष – | ७५ |
| अस्य पुत्र श्रीराजा गलिज भोगवर्ष – | ८१ |

यति सबै किराती राजा राजा हुँदा दरवार गोकर्णका जङ्गलभित्र थियो। दरवारसन्धि घेरै जम्बु
थिया र सर प्रहार गरी मार्दा जम्बुकहरू भागी जाई गुहेश्वरीका शरणमा जाई लिङ्कन छोपी बस

र त्यस ठाउंलाई जम्बुकदो भन्छन् । यति २८(२४)पुस्ता किराती राजाले श्रीमहादेव किरातरूप धारण गरी श्लेष्मान्तक वनविषे किरातरूपले विहार गर्दा भयाका हुनाले ईश्वरका प्रभावले गरी इ किराती राजाहरूले महाप्रतापवान् भै नेपाल मण्डलको अधिपति भै बहुत सामर्थवान् भै राज्यभोग गऱ्याका थिया । किरात राजाहरूको जम्मा भोगवर्ष १७४१ कलि लाग्यादेखिको कलिगतवर्ष १५१६ इ किरात राजाहरूका पालासम्म श्रीपशुपतिनाथ किरातरूपमा विराजमान भै वनविहार गरिरहंदा भयाका थिया ।

## किरातीहरूलाई जिती राजा निमिष्टांकार वर्माको राज्य

यहाँ उप्रान्त अघि पूर्वकालमा पशुपतिनाथ हरि योगेश्वर भै तपोवनविषे वनविहार गरिरहँदा समय श्रीहरिणेश्वरबाट ब्रह्मा विष्णु इन्द्रादि देवताहरूकन भविष्यवार्ता प्रसन्न भया । किराती राजाकन क्षत्री राजाले युद्ध गरी जिती नेपाल मण्डलमा राज्य गर्न्याछ । तिनका राज्य हुँदा किरातरूपको वनविहार समाप्त हुन्या छ । ती राजाहरूले धर्मको स्थिति नेपालमा गर्न्याछ भन्न्या आज्ञाअनुसार भै गयाको संक्षेपले गरी कहिन्छ ।

किरात राजा गलिज नेपालमण्डलको राज्य गरिरहंदा समय दक्षिण दिशाका श्रीनिमिष्टांकार वर्म्मा महाप्रतापसँग धेरै दक्षिणी सैन्य साथ ली आई युद्ध गरी राजा भया । अस्य भोगवर्ष ५० इ राजा कौन वंशका हुन् भनौला त –

"अथान्तरे सूर्यवंशोत्पत्तिं कथयति कल्पान्ते भगवतो विष्णोः नाभिकमलोद्भूतो ब्रह्मा प्रादुर्भूतः"

श्रीब्रह्मापुत्र श्रीमरीचि, तिनका पुत्र कश्यप ऋषि, तिनका पुत्र श्रीसूर्य, तिनका पुत्र श्रीवैवस्वत मनु, तिनका पुत्र श्रीइक्ष्वाकु इनैका वंशका राजा श्रीविशाल, तिनका पुत्र हेमचन्द्र, तिनका पुत्र भूचन्द्र, तिनका पुत्र धूमा (श्व) तिनका पुत्र श्रृंजय, तिनका पुत्र सुवर्णषटि, तिनका पुत्र कृशाश्व, तिनका पुत्र सोमदत्त, तिनका पुत्र जन्मेजय, तिनका पुत्र प्रमितिमान्, तिनका पुत्र मतिमान्, यति सूर्यवंशका प्रभावले दक्षिणविषे राजा भयाका हुन् । इनै मतिमान्का वंशका हुन् । आदि इक्ष्वाकुका वंशका विशाल, तिनका कुलका हुनाले वैशालाधिप कहाया ।

जित्वा कैरातराजानं वाक्येन प्रत्ययेन च<br>
करिष्यति तदा राज्यं वैशाल्यधिपतिर्बली<br>
मूर्तिरेका मे भवति ब्राह्मणेषु प्रतिष्ठिता

यस ईश्वरका वाणी भया प्रमाण ५० योजन भित्रका जग्गा सम्मलाई नेपाल भनी शास्त्रमा कहिन्छन् । तिनै नेपाल मण्डलमा निमिष्टांकार वर्मा राजा भया । अघि किरातहरूले चलायाको म्लेच्छ

धर्मको चर्चा लोप गरिदिया। इनै सूर्यवंशका राजा निमिष्टांकार वर्माबाट जित्याका राजा गलिजका पुर्खा गरी जम्मा पुस्ता २८ ले नेपालमा राज्यभोग गऱ्या। गोकर्णका जंगलभित्र ठूला दरबार बनाई बस्याका थिया। दरबारसन्धि धेरै जम्बुक थिया र किरातहरूका अन्तका समयमा धेरै जम्बुकहरू जम्मा भै दरबारैतर्फ हेरी आफ्ना जातानुसार शब्दले विशब्द गरी भुक्दा कराउंदा किरात राजा बहुतै दिक्क भै इन जम्बुकहरूकन मार भनी हुकुम दिदा सर प्रहार गर्दा इ जम्बुकहरू भागी गुप्तेश्वरका शरणमा जाई शिवलिंगकन छोपी बस्ता त्यस स्थानलाई जम्बुकद्यो भन्छन्।

राजा निमिष्टांकार वर्माबाट किरातहरूकन युद्धमा जय गरी नेपाल पुण्यभूमिका राजा भया। यी राजा बहुतै शूरा धर्मज्ञ नीतिशास्त्र जान्न्या क्षमादयावन्त शान्त शील स्वभावले संयुक्त भयाका थिया र शास्त्र विचारले देवताहरूका ध्यान मन्त्र यन्त्र तन्त्रादि शास्त्रदेखि थाहा पाई नेपालको माहात्म्य ठूलो जानी धर्मज्ञ शास्त्रज्ञ ऋग्वेद यजुर्वेद अथर्ववेदका भेद जान्न्या यस्ता उत्तम ब्राह्मणकन परीक्षा गरी उनका द्वारबाट श्रीपशुपतिनाथकन चतुर्व्यूह मूर्ति बनाई अघिका मूर्तिमाथि सुप्रतिष्ठा गराई नित्य नैमित्य यथाशास्त्रोक्त वाक्यले गरी अर्चन गराया। अघिका विशालनगरका स्थानमा फेरि नगरवृद्धि गरी आफ्नासाथ आयाका सैन्य प्रजाकन वास दिया। बहिरदेशबाट फेरि झिकाई पनि वास गराया। फूलचोकमनि गोदावरीसंध दर्बार बनाई बस्या। किरातकन नेपालमा निवृत्ति गरी हरिभक्त शर्मा ब्राह्मणका बुद्धि सुनी जम्बूद्वीप किरात नेपाल मण्डलविषे तेजस्वी भै वेदोक्त शास्त्रनीति प्रमाण प्रजाको पालना गरी शास्त्रानुसार नेपाल मण्डलका देवता प्रकाश गरी पुण्यस्थलमा प्रजाहरूबाट पुण्यकर्म गराई धर्मले प्रजा पालना गरी कर्मका प्रभावले सुभिक्ष भै ऐश्वर्यवृद्धि पुण्यात्मा धर्मिष्ठ नरका अधिपति भै आनन्दसित 'राज गरी श्रीपशुपतीश्वर प्रभृति देव देवीकन विधिपूर्वक पूजा मान्य सेवा गरी प्रजाहरूबाट पनि पूजा मान्य सेवा गराई रह्याका थिया।

## नेपालमा बंगाली मैथिलीहरूको प्रवेश

यसै समयमा बंगाला देशबाट आचार्य ब्राह्मण वेदशास्त्र तन्त्रशास्त्र जान्न्याहरू आया। तिनकन पनि सन्मान गरी वास गराया। त्यहोपछि पञ्च द्रविड पंच गौड मैथिल ब्राह्मणहरूकन पनि बोलाई सम्मत गरी देव देवीहरूका ध्यान विधान जानी शास्त्रोक्त प्रमाण गरी धेरै ग्रन्थहरू संग्रह गरी ग्रंथहरू पनि बनाई नेपाल क्षेत्रमा फैलाइदिया। सब प्रजा धर्मज्ञ भक्तिमान् बुद्धिमान् भै गया। भट्टबाट सामवेद व्याकरण प्रख्यात गराया। गुजराती बाजा स्थान स्थानमा प्रख्यात गरिदिया। मैथिलबाट ज्योतिष न्यायशास्त्र प्रख्यात गराया। अरू ब्राह्मणहरूबाट नाना शास्त्र

पुराणादि प्रख्यात गराया। यस्ता प्रकारसंग पंच गौड पंच द्राविरबाट वेदशास्त्र तन्त्रशास्त्रोक्त प्रमाण स्थान स्थानमा अधिका देव देवीहरूको मन्त्र यन्त्र ध्यान विधान जानी स्वयम्भू आदि देवताहरूको प्रतिमा प्रतिष्ठा गर्न्या विधान शास्त्रोक्तले गरी धर्मज्ञ ब्राह्मणहरूका बुद्धि सुनी ईश्वर ईश्वरीको आराधना भाव भक्ति गर्नाले ईश्वरका अनुग्रहले इन सूर्यवंश राजाले नाना प्रकारले यश कीर्ति वृद्धि गरी धन्य कहाई रह्याथ्या । फेरि यिनका पालामा दक्षिण गोदावरीमा बगाई लग्याका स्मरणि झोली बघंबर तुम्बा आदि, कोही एक सिद्ध जोगी नेपाल पुरीमा नीलचूड़ पर्वत मुनिबाट प्रकट भयाकी गोदावरी पुग्दा स्मरणि आदि वस्तु बगी प्रकाश हुँदा निश्चय गोदावरी हुन् भनी राजा प्रजाकन जाहेर भै राजा प्रजाहरू सब जाई गोदावरी सत्य हो भनी निश्चय मानी स्नान–दान गरी मर्यादा बढ़ाया। यस्ता प्रकारसंग,परम आनन्दसित राज्यभोग गरी श्रीपशुपतिनाथको शैवभक्तिले युक्त भै धन्य विशालाधिप कहाई राज्यभोग गरिरह्याका थिया।

## राजा पशुपुष्पवर्माद्वारा ४ वर्णको स्थितिरचना

अस्य पुत्र श्रीराजा मतागाक्षवर्मा भोगवर्ष ६१ इन राजाले पनि बाबाका पालामाको रीत थामी सत्संग गरी देवालय गृह नगर ग्रामहरू शास्त्र प्रमाण बनाउन लाई नेपालमा शुभवृद्धि गरी प्रजाकन प्रतिपाल गरी देव ब्राह्मणकन सन्मान गरी राज्य भोग गरिरह्याका थिया।

अस्य पुत्र श्रीकाकवर्मा राजा भोगवर्ष ७६ इन राजाले पनि बाबु बराज्यूले चलायाको रीत नघगाई स्थान स्थानमा देवताहरूकन अर्चन गराई धर्मले प्रजा प्रतिपाल गरी शास्त्रार्थ गराई नेपालमा धर्मको स्थिति गरी ईश्वरका सेवाले युक्त भै राज्यभोग गरिरह्याका थिया।

अस्य पुत्र श्रीराजा पशुपुष्प वर्मा भोगवर्ष ५६ इन राजाले कलि लाग्यापछिको प्रथम टूलो कीर्ति श्रीपशुपतिनाथकन सुन्दर शास्त्रोक्त प्रमाण वास्तुक्रमले देवालय उच्चा गरी सुनका छाना बनाई अति सुन्दर गरिसकी शास्त्रज्ञ ब्राह्मण पण्डित यतिसंग सम्मत गरी यन्त्रले गरी ब्रह्म क्षत्री वैश्य शूद्र चार वर्णको थिति बाँधी स्वस्वधर्ममा चलाई गोब्राह्मणकन प्रतिपाल सन्मान गरी न्याय नीतिका रीतले प्रजाकन पालन गरी आनन्दसित पशुपतीश्वरको भक्ति भाव गरी यस कीर्ति बढ़ाई आनन्दसित राज्यभोग गरिरह्याका थिया।

## राजा भास्करवर्माद्वारा सुवर्णपुरीको स्थापना

अस्य पुत्र श्रीराजा भास्करवर्मा भोगवर्ष ७४ यिन राजा बडा तेजस्वी प्रतापवान् थिया। पूर्वकालमा

श्रीहरिशेश्वरबाट नेपालमा किरातले राज्यभोग गर्न सक्यापछि क्षत्रिय राजाहरूले ठूलो कीर्ति गरी धर्मले मेरा क्षेत्रको पालना गर्न्याछ भनी भविष्यवाणी प्रसन्न हुंदाको एक श्लोक ।

शिशुपालावतारेण श्रीमता भक्तवर्मणा
करिष्यति जगत्कीर्तिमनेकां समरशासनात्

यही वाणी अनुसार इ राजा पूर्वकालमा श्रीयुधिष्ठर महाराजाका राजसूय यज्ञमा श्रीकृष्णकन शिशुपालले हास्य गर्दा श्रीकृष्णबाट सुदर्शन चक्रले प्रहार गरी मार्‍या । त्यसै शिशुपालका अवतार भयाका श्रीभक्तवर्मण केहियाका नेपाल परम क्षेत्रमा वैशालाधिपति कहियाका निमिषांकार वर्माका वंशका पाँचौ पुस्ताको राजा श्रीभास्करवर्मा इ राजाले आफ्ना पुर्खाले गर्‍याको थिति सब थामी श्रीपशुपतिनाथका पाशुपतास्त्र मन्त्र जगाई सेवा गर्‍या । फेरि भूत डामर तन्त्रका उक्त प्रमाण साम्राज्य वृद्धि हुन्या रीतले गोकर्ण स्थानमा स्थूलकाय श्रीभैरव प्रतिष्ठा गरी अकील महामन्त्रको पुरश्चरण गरी विधिपूर्वक संपूर्ण गरी श्रीपशुपतिनाथका प्रसाद पाई भैरवका अकील मन्त्र जगाई महाप्रतावान् भै श्री पशुपतिनाथका अनुग्रहले मन्त्री सर्दार धेरै सैन्य समूह गरी-

योसौ भास्करवर्म्मं नाम नृपतिः सूर्यान्वये सम्भवो
कैरातान् समरे विजित्य जलधेःतीरोन्तराज्याप्तवान्

दक्षिण मुख गरी प्रस्थान गरी जाई स्थान स्थानमा जाई युद्ध गरी केही प्रतापका बलले वश गरी हटाई जिती दक्षिण उत्कल देश आदि नाना देश जिती दक्षिण महोदधि समुद्रपर्यन्त पुगी श्री श्वेतवराहका समीपमा श्रीमातृकाको स्थापना गरी धेरै मुलुक फिरी बडा बडा महाराजहरूले मान्य गराई स्वस्थसित अनेक रत्न हीरा मोति पद्मराग मर्कट मणि इन्द्रनील मणि शेखर मणि वैदूर्य मणि कर्केटन मणि भीष्म मणि पुलेक मणि रुद्राक्ष मणि मुगा इत्यादि नाना प्रकारका सुवर्ण रौप्य नाना पदार्थका द्रव्य देश देशका राजाहरूबाट ली नेपाल क्षेत्रमा आइपुगी श्रीपशुपतिनाथकन अर्पण गरी सुवर्णपुरी बोलाया । फेरि श्री पशुपतिनाथका पश्चिम मुखसन्धि धेरै ब्राह्मणहरूकन निमन्त्रणा गरी तीन मासपर्यन्त सुवर्णाहुति यज्ञ गरीधेरै सुवर्ण खर्च गरी सुवर्णोदकले पशुपतिनाथकन स्नान गराई वाग्मतीमा बगाइदिया । सुवर्णपुरी भनी नाम प्रख्यात गर्‍या ।

## गोदावरी दरबार छाडी राजा भूमिवर्माद्वारा बानेश्वरमा दरबार निर्माण

इन राजाले दक्षिण देशमा जय गर्न जाँदा पद्मनाभ विष्णुको दर्शन पाई सोही प्रमाणका मूर्त्ति पूर्वकालमा सूर्यकेतु राजाले नेपालमा प्रतिष्ठा गर्‍याको शतरुद्र पर्वतका श्रीजलशयन नारायण रह्याका छन् । बुढानीलकण्ठमा जाई विधिपूर्वक पूजामान्य गर्‍या । नेपालक्षेत्रमा इ राजा बहुतै

पुरुषार्थ भै धन्य धन्य कहाईनेपाल क्षेत्रकन धर्मले पालना गरी श्रीपशुपतिनाथका नित्य नित्य सेवा गरी परम आनन्दसित राज्यभोग गरिरह्याका थिया । पूर्वकालमा श्रीहरिगणेश्वरबाट शिशुपालका अवतार भयाका राजासम्म मेरा क्षेत्रको धर्म स्थिति गर्न्या छ भन्न्या वाणी प्रसन्न भयाको हुनाले इनका सन्तान भएनन् र एक सूर्यवंशीका क्षत्रीकन धर्मपुत्र पालना गरी भूमिवर्मा नाम राखी राज्याभिषेक दिया ।

श्रीराजा भूमिवर्मा भोगवर्ष ४१ इन राजाले गोदावरीका दर्बार छाडी बानेश्वरसन्धि दर्बार बनाई बस्दाभया । अस्य पुत्र श्रीराजा चन्द्रवर्मा भोगवर्ष ६१ अस्य पुत्र श्रीराजा जयवर्मा भोगवर्ष ६२ अस्य पुत्र श्रीराजा वर्षवर्मा भोगवर्ष ५१ अस्य पुत्र श्री राजा सर्ववर्मा भोगवर्ष ६८ अस्य पुत्र श्रीराजा पृथ्वीवर्मा भोगवर्ष ५६ अस्य पुत्र श्रीराजा ज्येष्ठवर्मा भोगवर्ष ४८ अस्य पुत्र श्रीराजा कुवेरवर्मा भोगवर्ष ७५ अस्य पुत्र श्रीराजा हरिवर्मा भोगवष ७८ अस्य पुत्र श्रीराजा सिद्धिवर्मा भोग वर्ष ६७

## चार नारायणको मन्दिरनिर्माण

अस्य पुत्र श्रीराजा हरिदत्त वर्मा भोगवर्ष ४६ इन राजाले नेपालमण्डलविषे चार धामका स्वरूपले विराजमान भयाका नारायणहरूबाट स्वप्नमा दर्शन पाई नेपाल भूमिमा चार शिखर स्थान ठहराई श्रीज्योतिस्वरूपका पूर्वभागमा दोलागिरि पर्वतविषे विराजमान भयाका श्रीगरुडनारायण श्रीछिन्नमस्ता काली शक्तिसहित कीलेश्वरका अघिका वर्णन शास्त्र प्रमाण ठहराई पूजा मान्य गऱ्या । नाग पञ्चमीका दिन शंखदहको मेला ठहराई प्रख्यात गरिदिया । देवालय पनि बनाई नित्य नैमित्य अर्चन गराया । फेरि वायव्य कोणमा शतरुद्र पर्वतविषे विराज भयाका चयङ्गुनारायणकन पूजा मान्य गरी देवालय बनाइदिया । यसै स्थान सन्धिबाट प्रकट भयाको विष्णुमती हुन् भनी विष्णुमतीका तीर्थविषे स्नान गरी प्रजाहरूबाट पनि सेवा भक्ति स्नान गराया । फेरि पश्चिम भागमा विराजमान भयाका इचंगु नारायण शक्तिले सहित विराजमान भयाकाकन पूजा मान्य गरी देवालय बनाइदिया । तीर्थ विष्णुमती र भद्रमतीसंगम तीर्थको मेला रामनवमीका दिन स्नान दान गरी मान्या । फेरि नैऋत्य भागमा श्रीनृसिंहनारायण शिखरी लक्ष्मीसहित विराजमान भयाकाकन पूजा मान्या गरी देवालय बनाई प्रख्यात गराया ।

भाद्र शुक्ल १४ का दिनमा नरकतीर्थमा स्नान दान गराया । त्यस स्थानलाई फर्पिङ भन्दछन् । यति चार नारायणकन श्रीहरिदत्त वर्मा राजाबाट स्थान स्थानमा जाई शास्त्र विचार गरी ईश्वरकन प्रख्यात गरी स्वयम्भू ठहराई भक्तिभाव गऱ्या । प्रजाहरूबाट पनि गराई

आनन्दसित प्रजापोलन गरी राज्यभोग गरिरह्याका थिए। फेरि केही दिनपछि शंखमूल संगममा विराजमान भयाका कोटेश्वर स्वयम्भू शंभुबाट हरिदत्तवर्मा राजाकन दर्शन दिदाभया। यस्तै समयमा दक्षिणविषे वैजनाथ भनी महादेवको नाम प्रख्यात भै गया। यस्ता तरहका ईश्वरका सेवा भक्तिले दर्शन पाई कृतार्थ भै अन्तमा उद्धार भै गया।

## राजा वृषदेवको जैनधर्ममा प्रवेश

अस्य पुत्र श्रीराजा वसुदत्त वर्मा भोगवर्ष ३३ अस्य पुत्र श्रीराजा प्रतिवर्ष वर्मा भोगवर्ष ३५ अस्य पुत्र श्रीराजा शिववृद्धि वर्मा भोगवर्ष ५७ अस्य पुत्र श्रीराजा वसन्त वर्मा भोगवर्ष ६१ अस्य पुत्र श्रीराजा शिवदेव वर्मा भोगवर्ष ५७ अस्यपुत्र श्रीराजा वृषभदेव वर्मा भोगवर्ष ६१

यो राजाले बौद्धाचार्यसंग मिली जैन मार्गमा पसी वेदको धर्म छाड़ी कुलधर्म त्याग गरी केही बहिर बुझाउननिमित्त स्वधर्मको कम गऱ्या झैं मात्र गरी मारण मोहन उच्चाटन वशीकरण अतिहित मान्या। आफ्ना मार्गका देवताहरूको सन्मान छाड्दा विशाल चन्द्र-पुरमा घाट मन्दिर बनाउननिमित्त श्रीजलशयन नारायणसन्धि दुवा रास थुप्याको थियो। शत-रुद्र पर्वत भत्की आउंदा पनि त्यस स्थानमा याद नगर्दा सब ठाँउ पुरिन गयो। पछिबाट त्यस ठाउँमाथि बर्घेचासुद्धा बनाइदिया। बौद्ध मार्ग प्रबल भै यी राजाले वज्रयोगिनीको सेवा गर्दथ्या एकदिन यी राजालाई बौद्ध भगवान्ले दर्शन दी आज्ञा गऱ्या। हे राजन्? म लोहशिला स्थानसन्निका पोखरीमा वास गऱ्याको धेरै दिन भयो। पिंगला नाम मारवाड देशका राजा सुदत्ताकी रानी नेपालमा आई गुह्येश्वरीको सेवा गर्दा मन्दिर बनाई वास गऱ्यादेखि म त्यहीं बसि रह्याको छु। गमन मेरो धर्मदत्त राजाका पालामा शतरुद्र पर्वतदेखि हो। अब त्यही स्थानमा गणावर्त सहित गरी मन्दिर बनाऊ। यो स्थानमा मेरा अति रमणीय स्थल हो। त्यस तलाउका मनितिर द्रव्य राख्याका छन्। त्यही द्रव्य चैत्याकारमा भित्र र गर्भाखी मन्दिर बनाऊ मेरा नाम धन्दोदेव भनी प्रख्यात गर भनी स्वप्नविषे आज्ञा भयो र राजाले यथाक्रमले गरी बनाई मञ्जुबाहाल भनी चावहिल नाम देश बनाया। त्यसै दिनदेखि धंदोचैत्य भनी नाम प्रख्यात हुन गयो।

## वृषदेवद्वारा चैत्य र नगरहरूको निर्माण

फेरि यीराजाले विचार गरी नेपालका देवताहरू चतुर्क्रम गरी विराज होउन्। बौद्ध मूर्तिले पनि विचार गरौला भनी गोदावरीसन्धि पञ्चबौद्ध एक मूर्ति गरी प्रकाश गराया। बन्देगाउँ भनी एक देश बनाया। इन दिनदेखि नेपालमा बौद्ध मूर्ति चार भै गयो। सिम्भू खासा धंदो बन्दे गाउँको देवता यति प्रसिद्ध भयो।

फेरि यिनै वृष देव राजाका पालामा दक्षिण दिशाविषे गौड देशका प्रचण्डदेव नाम राजा थिया। तिनले प्राजाकन पालना गरिरह्याका थिया। केही दिनपछि यिन राजालाई बौद्ध धर्म अतिप्रिय हुन जाँदा पुत्रकन राज्याभिषेक दी देश देश भ्रमण गरी नेपालविषे आई सिम्भूमा पुगी दर्शन गऱ्या। त्यस ठाउँमा सामर्थी गुणाकर नाम एक बाँडा थिया र प्रचण्डदेव राजाले त्यहाँ भिक्षुकचर्या लिया। त्यहाँपछि सान्तश्री भिक्षु भनी नाम राखी स्वयम्भूकन सेवा गरी यसै स्थानमा रहन्छु भनी रह्याका थिया। केही दिनपछि स्वयम्भू कुण्डकन चैत्याकारले छोप्नुपर्‍यो भनी गुरु गुणाकर भिक्षुसंग बिन्ति गरी संमत गरी राजा वृषभकन हात लिया। राजाले पनि तिनै भिक्षुका मतमा प्रवृत्त भै उनीहरूका संमतप्रमाण स्वयम्भू कुण्डकन चैत्याकार बनाई छोपिदिया।

फेरि वसुपुर, वरुणपुर, अग्निपुर, वायुपुर, संम्बरपुर भनी पञ्चपुर बनाई पाँचै देवता स्थापना गरिरह्याका थिया। बौद्ध मार्गमा सिम्भूका पर्वतकन सत्ययुगमा पद्मगिरि त्रेतायुगमा बज्रकूट द्वापरमा गोश्रृंग कलियुगमा गोपुच्छपर्वत भनी कहन्थ्या। कलियुग लाग्यापछि फेरि स्वयम्भू पर्वत भनी कहन्थ्या। यस्ता तरहसंग वृषभदेव राजाले बौद्धमार्गमा पसी रहँदासमय केहीपछि नेपालमा गोदावरीसन्धि जाई पञ्च बौद्ध एकत्व मूर्ति गरी स्थान बनाई स्थापना गरिदिया। यिन राजाका पालामा नानेश्वरसन्धि ठूलो विहार बनाई शाक्यसिंह भगवान्‌को प्रतिष्ठा गरी बौद्धमार्गको मात्र सेवन गरिरहयाका थिया।

## विराटेश्वरको स्थापना

अस्य पुत्र श्रीराजा शंकरदेव भोगवर्ष ५० यिनै राजाले धेरै मिहिनेत गरी धेरै द्रव्य खर्च गरी श्रीपशुपतिका उत्तर दरबाजा सन्मुख मनवेगी लोहका ठूलो त्रिशूल बनाई चढ़ाया। फेरि राजराजेश्वरी सन्धिका कूपविषे पूर्वजन्मका छायास्वरूप दर्शन हुन्थ्या र पछि हुँन्या राजा आदि प्रजाहरूकन पाप पुण्यका अनुसार पूर्व जन्मका स्वरूप छायामा अब उप्रान्त बढिया छायाको दर्शन ज्यादा नहुँदा कष्ट हुन जाला भन्नानिमित्त कूप पुरी अग्रभागमा जातिस्मरण नाम गरी ठूलो महाविराटेश्वर महादेव स्थापना गरिदिया। फेरि श्रीपशुपतिनाथका पश्चिम ढोकाभित्र नदी मूर्ति बनाई स्थापना गरिदिया। त्यहाँपछि शिवको र नदीको अन्तर्गमन दोष निवारण गरिदिया।

## जलशयन नारायणको प्रकाश

अस्य पुत्र श्रीराजा धर्मागतदेव भोगवर्ष ५१ यिन राजाले श्रीपशुपतिनाथका दक्षिणे महत् वृषभध्वज स्थापना गरिदिया। यिन राजाले पर्व पर्वमा श्रीगरुड़नारायण श्रीइचंगुनारायण श्रीनृसिंहनारायण श्रीच–यजुनारायण यि चारै नारायणका स्थानमा जाई सेवा गर्दथ्या। यस्ता तरहसँग सेवा गरिरहंदा कोही

समय आदि जलशयन नारायणबाट राजाकन स्वप्नमा दर्शन दी आज्ञा प्रसन्न हुंदाभया । हे राजन् तिमीले चारधाम वारंवार गर्नुपर्दैन । मलाई सेवा गर । म शतरुद्र पर्वत पैन्हा भत्की छोपिन गयाको छु । यस स्थानमा मलाई गुप्त गरी नराख प्रकाश गर भन्न्या अनुग्रहवाणी स्वप्नामा पाउँदा धर्मागत राजा–बाट प्रजा लोककन बोलाई आदि जलशयन नारायण यस स्थानमा गुप्त भयाका रहयाछन् भनी यिन ईश्वरकन प्रकाश गराउन पऱ्यो भनी ढुंगा माटोले पुरियाको खनी पर सारी हेर्दा श्रीजलशयन नारायण प्रकाश भया । यिन राजाले नित्यार्चन विधिपूर्वक गराई पनि श्रद्धा भक्ति राखी पूजा भक्ति मान्य गऱ्या ।

यहाँ उप्रान्त धर्मागतदेव राजाले जलशयन नारायणबाट अघि तैंने चार नारायणका सेवा गर्नुपर्दैन मलाई मात्र सेवा गर ठूलो परिश्रम गर्नुपर्दैन भन्न्या अनुग्रहवाणी पाई नित्य यिनैका सेवा र योगेश्वरी श्रीवज्रयोगिनीका सेवा गरिरहयाकाा थिया । केही दनपछि ईश्वरीकन प्रसन्न गराई ईश्वरीका खुशी गर्नानिमित्त नित्य अग्नि जगाई कराहीमा तैलपाक गरी उस्माकुंदी पाक भयापछि योगेश्वरी प्रभृति योगिनी गणहरूकन भोजन गराई फेरी जीववरदान पाई द्रव्य पाई राजधानी सहरमा आइ ब्राह्मण गरीब फकीरहरूकन नित्य सुवर्णदान दी यस्ता तरहसंग ईश्वरीका अनुग्रहले सरीर होम गर्नु सकिन्या समर्थ पाई यस्ता उग्र तप गरी परम आनन्दसंग राज्य भोग गरिरह्याका थिया ।

## विक्रमसेनको नेपालमा आगमन

परापूर्वदेखि नेपालमध्यका आदि सहर विशालनगर हो । शंखमूल तीर्थदेखि आदि जलशयन नारायणका स्थानसम्म एकै नगर थियो । ९९००० उनान्सय हजार गृह थिया यस सहरमा धर्मागत नाम गऱ्याका राजाले राज्यको प्रतिपाल गरी श्रीवज्रयोगिनीका परमभक्त भैं रह्याका थिया । यिन राजाका पर्यायमा श्रीपशुपतिनाथ र श्रीवज्रयोगिनीका अनुग्रहले परमार्थ पाउन योग्यका नर जन्म भयाका हुनाले देवगति नाम उज्जैन नगरका विक्रमसेन बालख १२ वर्षका उमेर प्रान्त श्रीज्योतिस्वरूप पशुपति श्रीउग्रतारा सुप्रसन्न स्वप्नप्रसन्न भै उनै ईश्वर ईश्वरीका अनुग्रहले विक्रमसेन बालखकन तेरा प्रथम कर्मद्वार उज्जैनका उत्तार भाग नेपालनाम पुण्यभूमि हो भनी स्वप्नमा नेपालभूमिको र श्रीपशुपतिनाथको दर्शन दी श्रीउग्रतारादेवी प्रत्यक्ष देखाई निश्चय गराई आकर्षण गरी बोल्या ।

यस्ता तरहको उत्तम स्वप्न देखी ती बालख नेपाल आउनको बहुतै इच्छा गरी स्वदेशत्याग गरी नजाऊ भनी कसैले भन्या तापनि नमानी स्वप्नको प्रतीत मानी श्रीपशुतिनाथ श्रीवज्रयोगिनी देवीका चरणको शरण गरी आउँदा तिनको साथ बुद्धिसेन नाम गऱ्याका थिया । आयाका जीवलाई दिन समर्थ भयाका मामनाथ शर्म थिया । वैकुण्ठ नाम सेवक ती तीन जनाकन विक्रमसेनलाई श्रीपशुपतिनाथ श्रीउग्रतारादेवीबाट नेपालभूमिमा आउनू भन्या हुकुम भयाको छ । तिमीहरूलाई आमा बाबु पुत्र परिवारदेखि छुटाईकन किन म लेजान्छु भन्या मेले र केवल आटया गऱ्यापछि स्वार्थप्राप्ति हुन्याछ

भनी देख्या। तिमीहरूलाई पनि बढ़िया होला भन्न्या मनमा आयो। जीवन मरणको साथ तिमी हामी मेरा साथ हिड भनी बुझाई मलाई पनि अन्तमा मुक्ति इहत्रमा सुखप्राप्ति तीनै कुलकन पनि उद्धार सुबुद्धि गन्या पार लाग्न्या छ भनी ४ जनाको एक सम्मत गरी उज्जैनदेसबाट प्रस्थान गरी नेपालतिर गमन गरी आया। धरै देश घुमी आउंदा आउंदा नेपाल क्षेत्रमा पुगी विशालनगरमा प्रवेश गरी एक कोही जनका गृहमा वास गन्या। यस नगरका राजा धर्मागतदेव राजाका सेवा गर्न लाग्या। राजाले तिनलाई बहुतै सुन्दर लक्षणले संयुक्त भयाको देखी बोलाई आफ़्ना नजीक राखी तिमी को हौ ? कहाबाट आयौ। तिम्रा नाउं क्या हो? तिम्रा पुरुषार्थ क्याछ ? भनी सोध्या। मेरा नाम विक्रमसेन हो। मेरा जन्मभूमि उज्जयन देश हो भनी सब वृत्तान्त कही हजुरको सेवा गर्न आयाँ। जो हुँकुम सो काममा तयारी भनी विन्ति गर्दा राजा धर्मागतदेव बहुतै खुशी भै वीर पुरुष ठहराई आफ़्ना नजीकि गरी बहुतै प्रिय मानी राख्या। जहाँ गया पनि साथैमा लैजान्थ्या।

## अप्सराद्वारा तपोभङ्ग

अब विक्रमको पूर्वका आदिकथा संक्षेपले गरी कहिन्छ। यस पृथ्वीमण्डलमा एक कोही ऋषिले इन्द्रासन भोग गर्न अभिलाष गरी गंगातीरमा जाई तप गर्न लाग्या। तपस्या गर्दा गर्दा धेरै वर्ष व्यतीत भयापछि ऋषिको तपका बलले इन्द्रासनमा इन्द्रकन महाताप भयो र इन्द्रले त्रास मानी अप्सरा बोलाई तिमीहरू सबैमा कसले त्यस ऋषिको तप भ्रष्ट गर्न सक्दछौ ? भनी आज्ञा गर्दाभया र एक मेनका नाम अप्सराले अञ्जलि जोड़ी हे देवराज इन्द्र म सकुँला आज्ञा भयाजावस् भनी विन्ति गरी मर्त्यमण्डलमा ऋषिले तप गरिरह्याको स्थानमा आई प्राप्त भै गंगातीरविषे सब इन्द्रिय खैंची अखण्ड मन गरी अंगमा मृत्तिकाले पुराई सरीरै होइन कि भन्न्या जस्तै आकार गरी एकत्व चित्त गरी पवननिरोधि तपमा रह्याका थिया। अप्सराले तिनकन स्नान गराई फेरि मधुस्नान गरी मधुको रस पाया र ऋषिका चित्त उदय भै दिन रात मधु भोजन गराई सरीर पुष्ट गराई ऋषिको नेत्र उघारी हेर्दा अतिसुन्दरी अप्सरा देख्दा कामले पीडित भै मोह भै अप्सरासंग अनेक प्रकारले क्रीड़ा गन्या।

केही दिनपछि अप्सराको गर्भाधान भयो। मास पूर्ण भयापछि पुत्रको जन्म भयो। पुत्रकन नामकरणादि सकी कोही एक दिनविषे ऋषिकन अप्सराले यस्ता वचनले गरी हे प्रभु यस्ता वनमा बसी क्या सुख क्या भोग छ। अब मेरा विन्ति लाग्यो स्वर्ग लोकमा जाई सुखभोग गर्न जाउँ भनी विन्ति गर्दा ऋषिले बढ़िया भनी अप्सराले बालख बोकी अघि लाई ऋषि पछि पछि लागी स्वर्गका मार्गविषे जाँदा जाँदा अमरावती पुग्न लाग्दा अप्सराले हे प्रभु स्वामी मलाई बहुतै थकाइ लाग्यो। पुत्रकन एकछिन तपाईले लिनुहवस् भनी ऋषिलाई पुत्रकन बोकाई इन्द्रको दर्बार पुगी यथायोगले आशीर्वाद गर्दा इन्द्रबाट हास्य गरेर हे ऋषि धेरै वर्षसम्म तपस्या गन्याको फल फलेछ अति सुन्दर पुत्र पायाछौ भनी आज्ञा गर्दा म त भुलिगयाछु भनी

चेती पछिबाट महाक्रोध गरी इन्द्रका हजुरैमा पछारी मार्‍या । सरीर तीनखण्ड भै गया । पृथ्वीमा खसालिदिया । ऋषि फेर ध्यानमा जानाको इच्छा गरी जान लाग्दा इन्द्रले आज्ञा गर्नुभया । हे ऋषि बालख मार्‍याको क्या प्रयोजन अब त्यस बालखको क्या गति भनी आज्ञा भयो र ऋषिले यी तीन टुक्रा तीनस्वरूप भै जन्मी पछिबाट तीनको एकै हुन्याछ भनी ऋषि जाँदाभया ।

## विक्रमसेनको जन्म

त्यहाँ उप्रान्त केही कालपछि पादभाग बनिया भै जन्म्या । हृदिभाग क्षान्तिशिव नाम पाई जन्मी कापालिक योगी भै रह्या । केही दिनपछि त्यसै योगीले त्यसै बनियाँकन शिक्षा गरी पछिबाट विरोध हुन जाँदा शिष्यकन मारी मृतक बेताल भैगयो र कोही एक शिशपा वृक्षमा वास गराई राख्याको थियो । शिरभाग चाहि र उज्जैन देशका विष्णुशर्मा ब्राह्मण गृहस्था म छाड़ी ईश्वरीका उपासना गरिरहदा समय वीर्यपूण भै पतन हुँदा पृथ्वीमा नपरी विल्ववृक्षमा घसी राख्याको थियो । चन्द्रावती नाम गर्‍याकी एक क्षत्रियकुलपुत्री थिइन् । नित्य विल्ववृक्षमनि जाई खेल्दथिन् । दैवयोगले विल्ववृक्षलाई चाट्दा ब्राह्मणका वीर्य मुखद्वारबाट उदरमा रहन जाँदा चन्द्रवती मैया विना पुरुषका सँगले गर्भवती भइन् । लोक सबै आश्चर्य मान्या । विना पुरुषका संभोगले कन्या कस्ता तरहसंग गर्भवती भइन् भनी विचार गर्दा तपस्वीका आश्रममा जान्थिन् तिनसंग प्रसंग भै गर्भवती भयाको हो कि भनी विचार गर्दा कन्दमूल खाई तप गर्न्याले यस्ता कर्म गर्न्याछैन भनी परंतु बेस गरी विचार गर्दा तिनै तपस्वीका वीर्यले गर्भवती भयाको ठहर्‍यो । गर्भवती भया उप्रान्त दश मास पूर्ण भै

राधाशुक्ले पञ्चम्यां ब्राह्मे वृद्धौ गवौ दिवा
नाभिकुण्डद्वारा जन्म संसारे प्रख्यातः । जा स्य
त्रिभागीकृत्य द्विभागलोपः शिरभागस्य
विक्रमबालको जा :

अघि पूर्वकालमा ऋषीश्वरले एक पुत्र मारी त्रिभाग गर्‍याका हुनाले पृथ्वीमण्डलविषे तीन स्वरूप भै जन्म्याका हुन् । यी विक्रमकन अयोनि भन्दछन् ।

भूगोल नाम ग्रन्थको किंचित् संक्षेप कलियुगप्रमाण ४३२००० चार लाख बत्तीस हजार, मानिसको आयु १२०, मानसताल ७ साहस्तेन ३॥ हात प्रसून २१ वारपर्यन्त पनि कसै कसै कसैको हुन जान्छ । देवी विंध्यवासिनि धर्म्म ४ भोग पाप १६ भाग प्रख्यात राजा २५ हुन्याछन् । अघि पछिका भेद छैन ।

विक्रमादित्य १ शालिवाहन १ शंकरकुमार १ अप्यूपु १ प्रहस्त १ हरि १ ब्रह्मादि १ सुरेन्द्र १ वछ १

हरिषु १ भीम १ विक्रिषु १ महीन्द्रपाणि १ पिनाकपाणि १ शूलपाणि १ विक्रमपाल १ मुंज १ भोज १ नागपाणि १ शुक्रकु १ जगदेव १ रूपमेर १ सवर १ सिगर १ यति राजा कलियुगमा जम्बूद्वीपमध्ये चक्रवर्त्ती हुन्याछन् ।

## वज्रयोगिनीको कराही

यसैमध्ये दरियाको विक्रमादित्य जो छन् सो जन्म्या प्रान्त शशीवत् प्रतिदिन सरीरवृद्धि भै आया नामकरणादि चूडाकर्म गऱ्याप्रान्त विक्रम भनी नाम प्रख्यात हुन गयो । क्षत्रिय यथा भावकर्म पूर्ण भया प्रान्त १२ वर्षपछि नेपाल भूमिका श्रीज्योतिस्वरूप श्रीपशुपतिनाथका दर्शन श्री उग्रतारा योगिनीबाट स्वप्न प्रसन्न भै नेपालमा आफूसमेत चार जना भै आई विशालनगरका राजा धर्मागतदेवका सेवा गरी रह्या । केही दिनपछि राजाले बहुतै प्यारो गरी राख्दा समय एकदिन धर्मागत राजाले श्रीवज्रयोगिनीका स्थानबाट द्रव्य पाई नित्य ब्राह्मणहरूकन दान दियाको देखी यही स्थानबाट पाई दियाका रह्याछन्; अघि उज्जयनमा म रहदा स्वप्ना दी बोलाउन्या ईश्वरी यिनै हुन् भनी जानी एकदिन ती विक्रमले राजाभन्दा अघि रातका पैला प्रहरमा जाई स्थानमा प्राप्त हुँदा त्यहाँ कराही चूलामाथि बसाली तैलपाक गरी राख्याको देख्या । यी धर्मागत राजाले अर्धरात्रिमा कसैले थाहा नपाइन्या गरी जाई ईश्वरीको दर्शन गरी कराही कुंदिपाक गरी ईश्वरी प्रभृति योगिनी गणहरूकन भोजन गराई फेरि जीवदान पाई आउंदा रह्याछन् ।

यस्ता उग्र तप यि राजाले गऱ्याको कसैलाई थाहा थिएन । विक्रमसेनले खबर पाई त्यस स्थानमा प्राप्त भै ईश्वरीकन दर्शन गरी भक्तिभावले युक्त भै अनेक मसलाहरू सुगन्धादिले अङ्गलेपन गरी ईश्वरीस्मरण गरी तैलपाक भाँडामा कुंदिपाक भै गया । उसै बखत ईश्वरी योगिनी गणले सहित भै त्यहाँ प्राप्त हुँदा, आज त यी राजा हाम्रा प्रथम प्रहरका क्रीडामा आई पाक भै गएछ भनी मांसभोग गऱ्याको लोक —

> मांगल्ये जननी देवी संविदानंददानतः
> सर्वदेवप्रियां त्वां च मांसमित्यभिधीयते

मंगल गणले युक्त भै आनन्ददान पाइन्या देवताका प्रिय हुनाले यस्तो कर्म गर्न्या छैन भनी परन्तु बेम गरी विचार गर्दा तिनै तपस्वीको वीर्यले भोग गरी अति स्वादिष्ट हुँदा कृतार्थ भै पुनर्वार जीव-सन्देह गरी ईश्वरीबाट नित्य आउन्या त तिमी होइनौ, भनी आज्ञा गर्दा म धर्मागत राजाका सेवक हुं । मेरा नाम विक्रम हो भनी विन्ति गरी स्तुति गर्दा, ईश्वरी प्रसन्न भै वरदान

दी आज मेरा पीठ गएका योगिनी सब सन्तोष भया, अब मन वाञ्छित पारसमणिसमेत सौंपी धर्म अर्थ काम मोक्ष चार पदार्थ, पाउन्याछौ. अब उप्रान्त तिमीहरू आउनुपर्दैन। कृतार्थ भयौ । यही धनका प्रभावले सुख भोग गर भनी तेब्बर आयु बल पनि बक्सी अन्तमा उद्धार होला कलिमा यस्ता तरहको दुर्लभ हो भनी कराही घोप्ट्याउन लाई अन्तर्ध्यान भै गया ।

## विक्रमको राज्यप्रा

त्यहाँपछि विक्रम बहुतै कृतार्थ भै ईश्वरीका नाम स्मरण गरी फर्की डेरामा आया। आफ्ना साथका बुद्धिसेन नाम माननाथ शर्मा वैकुण्ठ नाम सेवककन ईश्वरीबाट भयाको अनुग्रहवाणी आदि सब विस्तार कही सुनाया बहुतै खुशी भया ।

यहापछि धर्मागतदेव राजा अर्धरात्रिमा पुगी ईश्वरीको दर्शन गरी पाकपात्र घोट्यायाको देखी आश्चर्य मानी ईश्वरी पुकाऱ्या। ईश्वरीबाट चाहिदो विधान पूर्ण भयो । हामी कृतार्थ भयौं। तेरा सेवकहात पारसमणि सौंपिदियाको छ सोही द्रव्यका प्रभावले सुख भोग गर, अन्तमा उद्धार हुंन्या छौ भनी वाणी सुन्दा अभिप्राय थाहा पाई क्या गरुँ मेरा प्रालब्धमा पैले सिद्धि पाउनु रहेनछ भनी सन्तोष मानी विशालनगर फर्की आयापछि विक्रम जाई सर्व वृत्तान्त राजासँग विन्ति गऱ्या राजाले तिमी धन्य छौ, मैले यतिका दिनसम्म सेवा गर्दा पनि सिद्धि पाउन सकिन तिमी एकैवार मात्र जानाले पनि ईश्वरीवाट सिद्धिवर पायौ तिम्रा पुरुषार्थ देखी म बहुत खुशी भयाँ भनी अब राजप्रतिपालित पुत्र विक्रमादित्यकन राज्याभिषेक दिया ।

अस्य नेपाले भोग वर्ष १२ अरू ज्यादा भोग दक्षिणमा गऱ्या । चक्रवर्ती पनि भया आफू राज्य भाग सब त्यागी ईश्वरीका स्थानमा जाई तपस्या गर्न गया । देवीका अनुग्रहले राजा धर्मागत उद्धार भै गया ।

## राजा विक्रमसेनद्वारा नारायण धाराको निर्माण

त्यहाँ उप्रान्त ती विक्रमसेनले कलिमा दुर्लभ भयाका परम प्रसाद पाई उज्जयन देशदेखि साथ ल्याया-का तीन जनाकन साथमा ली केही वर्षसम्म राज्य भोग गरिरहयाका थिया । आफ्ना दरबारनिकट पश्चिम भागमा धर्मागतदेव नाम राजाका नामले एक शिलामा चतुर्मुख नारायणकन स्थापना गरी तीर्थसहित युग्मधारा गरी बनाई नारायण धारा भनी प्रख्यात गऱ्या ।

यिन दिन देखि यो धाराबाट एक कुन्द पुष्प दुर्वासंयुक्त वर्षप्रति बगी आउन्या प्रभाव चलि गयो । त्यस दुर्वाकुन्द पुष्प जसले पाउँछ । उस मानिस निहाल भै जान्छन् । फेरि विशाल नगरका

मध्य स्थानमा आँफ्ना कुल देवता भवानीकन विधिपूर्वक अघिको स्थानमा जगाई रहस्य भावले अर्चन गराया। ठूलो लिगाकार देवालय बनाइदिया। मन्त्रीले सहित भै सेवा गऱ्या। फेरि आफ्ना दरबारका दक्षिणतिर घीमण्डप भनी अति सुन्दर गरी बनाया। पृथ्वीमा स्थान स्थानमा धेरैं धन गाडिदिया। फेरि ज्योतिपुर भनी नगर बसाईदिया। उसका दक्षिण भागमा महादुर्गावनमा नीलवाराहीकन प्रकाश गरिदिया । उप्रान्त दक्षिण दिशाबाट महेश्वर ठाकुर नाम षट्शास्त्रले पार गऱ्याका ब्राह्मण विक्रमादित्य सेनका पराक्रम पुण्य प्रताप सुनी नेपाल भूमिमा आया। राजाबाट उनको परीक्षा गरी गुरुपदवी गरी राजाबाट र मन्त्री बुद्धिसेनले विधि पुऱ्याई मन्त्र सुनी दीक्षाग्रहण गऱ्या।

## नेपालमा चाडवाड

त्यहाँपछि महेश्वर ठाकुरका सम्मतले चैत्रावली नवरात्र स्वल्प गरी शरद् ऋतुका नवरात्रि प्रतिपदा देखिसमी (अष्टमी) पर्यन्त चण्डिका प्रमाण प्रथम नेपालमा राजा प्रजा सबैले मान्नू भन्न्या रीत चलाया। यो देशभित्र कर्म साम्राज्य गऱ्यापछि हस्तिनापुरमा पनि चलाइदिया। अघि शरद् ऋतुको नवरात्रि कर्म दुनियाँलाई चल्याको थिएन। विनै राजाका पुण्य प्रतापले हिन्दुहरूमा चलाइदिया।

यहाँ उप्रान्त विक्रमदेव राजाले नेपालमा बौद्ध मार्गीहरूलाई श्रावण शुक्ल प्रतिपदादेखि मैनाभर बौद्धारंभ बौद्धयात्रा गराया। फेरि उपासन कर्म कृष्णपक्ष त्रयोदशी अन्नदान व्रीहिदान रीत चलाया। गणेश चन्द्रमा पूजा व्रत कलंक निवारण ऐश्वर्यदायक व्रत गराया। अष्टमीका दिन महालक्ष्मीव्रत शास्त्रोक्त प्रमाण गरी मनाया। नवरात्रि व्रतारंभ दुर्गाष्टमी देवी आवाहन प्रेत पीड़ा मुक्त गर्ननिमित्त शक्रस्थापनकर्म फेरि पितृपक्ष षोडश श्राद्ध प्रजालाई गराया। आश्विन कृष्ण अमावास्याका दिन श्रीलक्ष्मीपूजा प्रतिपदाका दिन स्वशरीरपूजा द्वितीया भ्रातृपूजा तृतीयाका दिन विसर्जन आदि धर्मव्रत, प्रेत पीडा निवारणादि हिन्दुधर्महरू गुरु महेश्वर ठाकुर बुध्दिसेन मन्त्रीका सम्मतले नेपालमा श्रीमहाराज वीर विक्रमादित्यबाट चलाइदिया।

## हरिसिद्धिदेवी र उनको नच

मन्त्री बुद्धिसेनले पनि ईश्वरीका पद ज्ञान जानी गुह्य गोविन्द नाम उत्तम गीत बनाया। श्लोक-

सत्कृता बुद्धिसेनेन वीरविक्रममन्त्रिणा
गह्वरं गुह्य गोविन्द सेवितापलदं चलत्

गीतका प्रथमको र अन्त्यको श्लोक निज तुरीयामृत रससुन्दरि कुरु गुरुपर ब्रह्मणि

हे चरित्र विचित्र बहुनाम श्रीजगदम्ब भजै

सर्वेश्वरि सर्वश्री बुद्धिसेनसेवित

सद्य दिव्य गुह्य गोविन्द श्रीपूर्णा सिमदीयं कुलं गीतम् ।

आदि संस्कृतबंध गरी बनाया। यिनै विक्रमादित्य राजामाथि श्रीउग्रतारादेवी सुप्रसन्न भै मलाई गुप्त गरीकन नराख। मेरा एक नाटक प्रख्यात गर भनी अनुग्रहवाणी पाउंदा विक्रमादित्यले विन्ति गर्‍या। हे ईश्वरी मैले कौन विधानले गर्न्या हो भनी विन्ति गरी ईश्वरीबाट यस नाटकको पध्दति त हरिसिद्धिपुराण भनी प्रख्यात छ। ऐश्वर्य आयुर्दाकारि त्यस विधान तेरा गुरु महेश्वर ठाकुर बुद्धिसेन मन्त्रीका सम्मतले लङ्काविधानका श्रेष्ठ ब.नेश्वरको पूर्व स्थापित गरी यो नाटक बनाऊ भनी आज्ञा पाई हरिसिद्धि पुराण प्रमाण गुरु मन्त्रीका सम्मतले त्रिशक्तिदेवी मूल देवता गरी नील सरस्वती आदि देव-देवी र सूत्रवीरले नागेन्द्रलाई वध गर्‍याको प्रमाण सब संयुक्त गरी ईश्वरीका आज्ञाले नेपालबाट काली खड्ग हातमा धरी आफ्ना जन्मभूमि उज्जयिनी पीठका हरिसिद्धि भवानी आवाहन गरी ल्याई नेपालका स्थान स्थानका देवताहरू आवाहन विधानले सूत्रप्रवेश नित्य नित्य नट नाटक जलशोधन गीत बाद्यसहित गरी प्रमाणले देवताहरूका मुख प्रकाश गरी नेपालका स्थिति गरी चित्यलीला बनाया।

हरिसिध्दिसमं (नृत्यं) नास्ति ब्रह्माण्डमण्डले

भनी लोकमा नट प्रख्यात गराया। यति कारणान्त नेपालमा यही हरिसिद्धि नट आदि प्रख्यात भया प्रान्त अरू नाच प्रख्यात भयाका हुन्।

## राजा विक्रमको स्वदेशगमन

यति केवल श्रीवज्रयोगिनीका अनुग्रहले वर प्रसाद पाई नेपालमा आफ्ना यश नाम प्रख्यात गरी द्वादश वर्ष नेपालको भोग गरी हिन्दुस्थानमा साम्राज्य चक्रवर्ती हुनुपर्न्या राजा हुँनाले कलिगतवर्ष २९६० उनन्तीस सय साठि वर्ष उप्रान्त अधि आफूकन नेपालको राज्याभिषेक दिन्या राजाका घरानका विश्वदेव नाम वाविवन्तिदेव नामका क्षत्री एककन नेपालको राज्याभिषेक दी गुरु महेश्वर ठाकुर मन्त्री बुद्धिसेनकन साथमा ली ईश्वरीबाट पायाको पारसमणि ली नेपालका देवताहरूको दर्शन स्पर्शन गरी प्रस्थान गरी आफ्ना जन्मभूमि उज्जैनविषे जाँदाभया।

उहाँ भर्तृहरि नाम विक्रमको दाज्यू पर्न्या राजा थिया। जसले भर्तृशतक नाम शतक बनाई वैराग्य भै

आफ्ना देश त्यागी देशान्तरगमन गरी तपचय्या गर्न गया र उनैका राज्यस्थान उज्जैनको राज्याभिषेक वीर विक्रमादित्यले पाया। त्यहाँप छ केही वर्ष उद्योग गरी धेरै मुलुक आफ्ना वशमा ली महाराज्य गऱ्या। बुद्धिसेन मन्त्रीका संमतले उद्योग गरी हस्तिनापुर डिल्ली तखतका महाराजा एकदन्तकन युद्ध गरी विक्रमादित्य दिल्ली तखतका महाराजा भयाप्रमाण प्रतिपदादेखि विजयादशमीपर्यन्त राजा प्रजा सबले मनाया। अरू अरू धेरै ठूला ठूला कीर्ति पनि गऱ्या। उज्जैनसन्धि देवदत्तनामा सिंहासन देवतादेखि पाई स्थापना गऱ्या। उसै स्थानमा बसी धेरै नीति शास्त्रका प्रबन्धले निसाफ गरी साँचो र झूटो दुइ थोक मिश्रित भयाकोमा विवेकले सत्यको सत्य झूटको झूट ठहराई नीति चलाउथ्या।

धन्वन्तरिक्षपणको ऽमरसिंहशंकु—
वेतालभट्टघटकर्परकालिदासाः
ख्यातो वराहमिहिरो नृपतेः सभायाम्
रत्नानि वै वररुचिर्नव विक्रमस्य।

यति महानवरत्न पण्डितहरूकन सभाविषे राखी शास्त्रानुसार नीति चलाई रहका थिया। ती नवरत्न पण्डितहरू मध्ये जनही श्लोक बनाई विक्रमसेनलाई चढ़ाई खुशी गराउँदाको श्लोकहरूका अर्थ

अथ नवरत्न — मित्रकन शुद्ध चित्तले १ शत्रुकन नीतिका बलले २ लोभीकन धनले ३ ईश्वरीकन पूजाले ४ ब्राह्मणकन आदरले ५ युवतीकन प्रीतले ६ बान्धवहरूकन बराबर देख्नाले ७ उद्धतहरूकन स्तुतिले ८ गुरुकन नमस्कारले ९ मूर्खकन कथाले १० जान्याकन विद्याले ११ रसिककन रसले १२।

सबै मानिसकन बढ़िया स्वभावले वश गर्नु १ माग्न्या मानिस हलुक हुन्छ २ ठाडो मानिस खस्दछ ३ कामातुर मानिस अपवाद लाग्छ ४ लोभीको कीर्ति हुदैन ५ दुर्जनले दुख पाउछ ६ दुष्टले अर्कालाई द्वेष गर्दा प्रीति मान्छ ७ धन नहुन्याले धाउँदछ ८ चित्त टेगानामा नरहन्या मानिसले ज्यूको चयन गर्न पाउँदैन ९ शोक गर्न्या मानिसले शंकाकन पाउछ १० ननिको बोल्न्या मानिस कसैको हुदैन ११ जुवाड्या मानिसले वारंवार कष्ट पाउँछ १२ —२—

राजाहरूको गहना नीति हो १ गुणिकहरूको गहना नरम हुनु हो २ स्त्रीहरूको गहना पति हो ३ स्त्रीपुरुषको गहना धैर्य हो ४ घरको गहना बालख हो ५ बुद्धिको गहना प्रस्तावमाफिक बोल्नु हो ६ वचनको गहना साफ बोल्नु हो ७ सरीरको गहना सुन्दर हुनु हो ८ निको हुन्या मानिसको गहना सम्झनु हो ९ ब्राह्मणको गहना शान्त भै रहनु हो १० संसारको गहना दौलत हो ११ सज्जन गृहस्थीहरूको गहना नहडबडाईचित्त स्वस्थ भै रहनु हो १२—३—

जान्या मानिसले धर्मान पैजे चिताउनु १ सधैं मनले विचार गरी काम गर्न्या मन्त्रीलाई सधैं मन्त्रीले गर्न्या कामको विचार गर्दैरहनु २ राज्यको समाचारकन बुझदैरहनु ३ अरु राजाहरूको राज्यकन नढाट्न्या चेवा फिजी राम्रो गरी हेर्नु ४ प्रीतिरसिककन सधैं गुप्त गरी राख्नु ५ दया रोसकन बेला बेलामा प्रकाश गर्नु ६ आपना ज्यूकन बडा यत्नले रक्षा गर्नु ७ रणभूमिमा आफ्ना ज्यूको माया नराख्नु ८ —४—

कृपण हुँनाले यशको नाश हुन्छ १ रिसले गुणको नाश हुन्छ २ अहंकारले सत्यको नाश हुन्छ ३ भोकले हुर्मतको नाश हुन्छ ४ कुव्यसनले धनको नाश हुन्छ ५ विपत्तिले धैर्यको नाश हुन्छ ६ चित्त भ्रमणले ब्राह्मणको नाश हुन्छ ७ चुक्लीले कुलको नाश हुँन्छ ८ सेखीले सामर्थको नास हुन्छ ९ ननिको चेष्टाले पौरखको नाश हुन्छ १० दारिद्र्यले आदरको नाश हुन्छ ११ ममताले आत्मज्ञानको नाश हुन्छ १२ —५—

क्षमा नभयाका मूर्ख तपस्वी १ अल्सी भयाका राजा २ रीस भयाका धर्मात्मा ३ दुष्ट भै अरुदेखि मान लिन खोज्न्या गृहस्थी ४ अति कृपण भयाको साहेब ५ शास्त्र जानी धर्म नगर्न्या मानिस ६ हुकुम नचल्न्या राजा ७ शुद्ध भैकन पनि सधैं अर्काको अन्न खान्या ८ वृद्ध भै रोगी भै दरिद्र भै तरुणी स्वास्नी भयाको मानिस ९ निन्दा गर्न योग्यका यी नौ जना मानिसहरू धिक्कार हुन् १० —६—

स्त्रीजनहरूका बल यौवन हो १ भिक्षुहरूका बल बारंबार माग्न जानु हो २ राजाहरूका बल प्रताप हो ३ सज्जनका बल सत्य बोल्नु हो ४ थोरै धन हुन्याको बल सोच्नु हो ५ ननिको काम गर्न्याको बल नभयाको कुरा सबनाई धेरै बोल्नु हो ६ आचार गर्न्या मानिसको बल मन स्थिर राख्नु हो ७ नरम हुन्याको बल विद्या हो ८ कुलको बल सबै जहान मिली रहनु हो ९ सेवाका बल धन पाउनु हो १० क्षमा गर्न्याको बल विवेक गर्दै रहनु हो ११ बडाको बल धेरै गुण जान्नु हो १२ —७—

कचहरीमा पक्षबाद बोल्न जान्या मानिस १ अर्काका वशमा रही गुमान गर्न्या २ दरिद्र भयाका गृहस्थी ३ तारिवल भै कुल चिह्न्या ४ अर्काका वशमा रही सुखी हुन खोज्न्या ५ वृद्ध भै तीर्थमा नजाई बस्न्या ६ घटिया मन्त्रीलाईप्यारो गर्न्या ७ बडा कुलमा जन्मी मूर्ख हुँन्या मानिस ८ स्त्रीका वशमा रहन्या पुरुष ९ वेदान्त शास्त्र जानी सत्कर्म नगर्न्या १० यी दश जनाबाहेक हास्य गर्न लायकका पृथ्वीमण्डलमा कोही छैनन् —८—

उखेली ल्यायाका रूखकन फेरि राम्रो गरी रोप्न्या १ फुल्याका फूलकन लिन्या २ साना बोटकन बटुलन्या ३ अग्ला रूखलाई निहुराईकन कलम गर्न्या ४ साह्रै ढल्याका रूखलाई आउंदे खडा गर्न्या ५ धेरै बोट एक ठाउंमा मिलिरह्याका बोटहरूकन छुट्याई फरक फरक गरी रोप्न्या ६ काढ़ा भयाका रूख सानातिनाहरूकन बाहिरतिर निकाल्न्या ७ ओइलियाका बोटहरूकन पानीले सेची संभार गरी

राख्न्या ८ यति आठ तरहसंग बगैंचाको काम गर्न्या मालिनी झैं मुलुकको बन्दोबस्त गरी गुल्जार गर्न जान्न्या राजा चिरञ्जीवि हुंन् –९—

## वीर विक्रम राजाको प्रश्न तथा पञ्चरत्न

यसै प्रकारसंग चक्रवर्ती राजा विक्रमादित्यसेनबाट परीक्षा गरी नीति चलाउननिमित्त सभाविषे राख्याका पण्डितहरूबाट बनायाका सम्पूर्ण नीति धर्मका बचन प्रमाण हुन् । एकदिन महाराजा वीर विक्रमसेनले आपना कचहरीमा जान्या पण्डितहरूसंग पांच थोक प्रश्न गर्दाभया । पण्डितहरूले पाचैवटा श्लोक बनाई अर्थ गरी पांचै प्रश्न गरी बिन्ति गर्दाभया । त्यस समयदेखि पञ्चरत्न भनी नाम प्रख्यात भयाका यी पाच श्लोकका अर्थ बुझी पढ्नाले मानिसहरू ज्ञानी हुन्छन् । चन्द्रमाले अन्धकारलाई नाश्याझैं ज्ञान भयाका मानिसलाई पञ्चरत्नले ज्ञानी तुल्याउंछ ।

अथ पञ्चरत्न दाता १ कोथनि २ लोभ ३ कसुर ४ क्षति ५ यी भन्याका पाँच श्लोक अति अन्धकारमा चन्द्रमा प्रकाश भयाझैं पञ्चरत्न शोभायमान हुन्छन्

उत्तरदाता कल्पवृक्षभन्दा ठूला हुन् १ माग्न्या मानिस तृणभन्दा पनि हलुका हुन् २ कुटुम्बहरू बल्दो अग्निभन्दा पनि दहन गर्न्या हुन्छन् ३ दुष्ट सखाहरू असल औषधिभन्दा पनि ज्यादा हो ४ तेजिला आँखा भयाकालाई कपूर लायाका सलाईको काम छैन ५ संसारमा इन्द्रजालभन्दा अर्को ज्यादा ठूलो जाल स्त्रीहरू हुन् –६– १

दौलत पाउन्या मानिस अहंकार गर्दछ १ संसारमा रही स्त्री आदि विषय सेवन गर्न्याको आपत् अवश्य आउछ २ पृथ्वीमा स्त्रीहरूले सबै पुरुषको मन हर्छ ३ राजाका सधैं प्यारो कोही हुंदैनन् ४ यमराजका हातमा नपन्याका जगतमा प्राणी कोही छैनन् ५ तारिवल मानिसलाई सबै जना मान्दछन् ६ दुर्जनहरूका वशमा पन्याका मानिसहरू एप् नलागी सहजसित उम्कन पाउंदैनन् ७ –२–

गुणको नाश गर्न्या लोभ हो १ पापमा घटिया कपट हो २ तपमा उत्तम सत्य हो ३ शुद्ध चित्त भयाका मानिसले तीर्थ जानु पर्दैन ४ गुण गुणमा ठूलो सौजन्य हो ५ सबै गहनाभन्दा ठूलो बुद्धि हो ६ सबै धनभन्दा ठूलो धन विद्या हो ७ जीर्ण गाईको खराब गर्न्या संसारमा अबजस हो –८ –३–

सबै शूरोभन्दा ठूलो इन्द्रिय जित्न सक्न्या शूरो हो १ पतिव्रता धर्ममा रह्याकी स्त्री उत्तम हो २ असल धन विद्या हो ३ आफ्नो स्थानमा वास गरिरहनु सुख हो ४ प्रजाहरू स्थितिमा रहुञ्ज्याल राज्यलाई आराम छ ५ औसर चुकाउनु हानि हो ६ बुद्धिमानुको काम सधैं सत्यमा रहनु ठूलो हो ७ सज्जन सित बस्नु लाभ हो ८ मूर्खहरूसंगका मोहबत् बडो कष्ट हो –९ –४–

ठूलो कवच क्षमा हो १ सरीरधारिका ठूलो शत्रु रीस हो २ मानिसहरूका शत्रु बल्दो आगो हो ३

चुक्ली घोर कालकूट विष हो ४ सर्पहरूभन्दा घटिया दुर्जनहरू हुन् ५ उत्तम धन विद्या हो ६ गहना भन्या काल हो ७ कविता बनाई खुश गर्न सक्न्याले राज्यकन वशमा लिन्छ ८ —५—

## देवराज इन्द्रद्वारा राजा विक्रमको सभाको परीक्षा

यस्ता प्रकारसंग प्रश्नका नवरत्न पण्डितहरूदेखि उत्तर सुनी परीक्षा गरी नीतिप्रमाण चलाउना निमित्त महाराज वीर विक्रमसेनले आफ्ना सभाविषे मुख्य गरी राख्दाभया। विक्रमादित्य नाम गर्न्याका महाराज सकल नीति शास्त्रकन जान्न्या बडा तेजस्वी भयाका तिनका सभाविषे बडा जान्न्या पण्डितहरू नौ जना सधैं रहन्थ्या। तिनीहरू नवरत्न भनी कहलाउंथ्या। एकदिन अकस्मात् देवराजबाट आफूसंगका दुई चाकरहरूलाई वानर वाननीका रूप गराई तिनीहरूका विद्या बल कहांसम्मको रहेछ भनी विचार गर्नानिमित्त पठाया। तिनीहरूले विक्रमादित्य राजाका कचहरीमा आई देवराजले हुकुम गरी पठायाबमोजिम प्रश्न गरी पण्डितहरूदेखि उत्तर ली वानर वाननी रूप छाडी आफ्ना असिलो रूप ली दर्शन दी ती पण्डितहरूकन वर्णन गरी फर्की जांदा विवेकसार वाननीले प्रश्न गर्न्याका आठ श्लोकको नाम—माधुर्य्य १ शास्त्र २ आरोग्य ३ दान ४ मूख द्विजाति ५ वैद्य ६ सुर्जाण ७ वृक्ष ८ यनि आठ प्रश्नका जवाफकन वानर ज्येष्ठक भन्दछन्

पण्डितहरूले उत्तर दियाका आठ श्लोकका अर्थ सुन्दरी तरुणी स्त्रीविषे मधुर कुरो बोल्नु १ बडा आदमीलाई आफ्नो बहुरूप देखाउनु २ वैरीलाई शुरयाइ देखाउनु ३ गुरुहरूका सामुन्ने नरम भै रहनु ४ साधुजनहरूलाई दया धर्म राख्नु ५ मर्म जान्न्या मानिसहरूसंग सधैं मिली रहनु ६ पण्डितहरूलाई धेरै तरहको मान मर्यादा राख्नु ७ पापी जनहरूमाथि सधैं सधैं मनमा दग्गा ली रहनु ८ यी आठ गुण जान्न्या मानिसहरूले सधैं धारणा गरी राख्नु ९ —१—

राम्रो गरी पढायाको शास्त्र इलमकन पनि बारंबार अभ्यास गर्दै रहनु १ मुलुकको २ राजाको नबिग्रन्या गरी सोझो सेवा गरी खुशी गराई राख्याका राजादेखि पनि संधैं मनमा डर मानिरहनु २ काखमा बस्याकी भई तपनि तरुणी स्त्रीको चरित्र संधैं याद गरी संभार गर्दै रहनु ३ शास्त्र राजा युवति स्त्री यी तीनै पदार्थ कसैका वशमा रहदैनन् सधैं आराम रहनु १ ऋण नहुनु २ परदेशको वास नरहनु ३ जीवनवृत्ति सधैं पाइरहनु ४ डर नभयाको ठाउंको वास पाई रहनु ५ सज्जनहरूसंग बस्नु ६ यी ६ थोक संसारमा सुख कहियाको छ — ३ —

दरिद्रलाई दान दिनु १ धन पाईकन पनि शान्त भै रहनु २ जवान भैकन पनि तपस्या मै रहनु ३ ज्ञान हुन्याहरूले मौन भै रहनु ४ खुशी मानिस भैकन पनि सुखको इच्छा नगर्नु ५ प्राणीहरूमाथि दया राख्नु ६ यी ६ थोकले मानिसलाई स्वर्ग पुर्याउंछन् ४ मूर्ख

मूर्ख भयाका ब्राह्मण १ संधै बूढ़ा भै घरैमा रहन्या गृहस्थी २ घरबारी भयाका दरिद्र ३ तारिवल भै फकीरहरूलाई पिराउन्या ४ नराम्री वेश्या ५ नीति नगर्न्या राजा ६ इ ६ थोक संसारमा निन्दा गर्न लायक हुन् —५—

मद्यपानमा रत भयाका वैद्य १ आफू शास्त्र नपढ़ी ताल सुर नाच्न न जान्न्या नट्वा २ वेदशास्त्र नपढ्याको ब्राह्मण ३ लडाईमा कातर हुन्या सिपाही ४ चाल्न नजान्न्या वेगसित दगुर्न नसक्न्या घोडा ५ मूर्ख भयाका संन्यासि ६ कुमन्त्रीहरूले घेरियाका राजा ७ धेरै उपद्रव भयाका मुलुक ८ यौवनले मात्तियाकी अर्कासित रत भयाकी स्त्री ९ यी नौ पदार्थकन जान्न्याहरूले चाँडै छाड्दछन् ६ —

राम्रो गरी पाक्याको अन्न १ राम्रो गरी विचार गरी काम गर्न जान्न्या पुत्र २ राम्रो गरी आफ्नु तावेमा राख्याकी स्त्री ३ सुपाठसित सेवा गरियाका राजा ४ राम्रो गरी विचार गरी उत्तर दियाको कुरो ५ राम्रो गरी तजबीज गर्‍याको काम छ यी ६ पदार्थ धेरै दिनसम्म पनि बिग्रन पाउँदैन ७—

फल नभयाका वृक्षकन पंछीले छाड्दछन् १ पानी नभयाका पोखरीकन सारसहरूले छाड्दछन् २ रस नभयाका बासी फूल भवराहरूले छाड्दछन ३ डढ्याका वनकन मृगहरूले छाड्दछन् ४ धन नभयाको पुरुषकन वेश्याहरूले छाड्दछन ५ राज्यश्री नभयाको राजाकन मन्त्रीले छाड्दछन ६ सबै थोककन प्राणीले काम कामका बलले भज्दछन् ७ कसैको कोही प्यारो होइन तसर्थ सबै प्राणीको प्यारो कामै हो ८

## बाँदरका प्रश्न तथा वानराष्टक

वानरले प्रश्न गर्‍याको आठ श्लोकको नाम द्वेषि १ दक्ष २ कृतौ ३ रूपं ४ स्तब्धं ५ शुष्केन्धनर्द्धजव ७ दुर्मत् ८ यी आठ प्रश्नकन वानराष्टक भन्दछन् ।

पण्डितहरूले उत्तर दियाको आठ श्लोकका अर्थ—अर्काको व्देष गर्न्या १ घिन मान्न्या २ संतोष हुन्या ३ रीस गर्न्या ४ संधै शङ्का मान्न्या ५ अर्काका भाग्यका भरौसाले जिउन्या ६ यी ६ जना मानिस सधै दुःखभोग गर्न्याहुन् — १ —

उद्योग गरो सेब काम गर्न्या जान्न्या धनकन बढ़ाउँदछ १ कुपथ्य कुरो छाडी सुपथ्य कुरो खान्या रोगी नभै सुखी हुन्छन् २ उद्योग गरी पढ़न्या मानिस विद्या जान्न्या हुन्छ ३ आचारमा रही धर्मको निमित्त कर्म गर्न्या मानिस धेरै जसकन पाउँदछ ४ — २ —

यज्ञ यागादि धर्म गर्दामा १ विवाह गर्दामा २ दुःख पर्दामा ३ शत्रुलाई जित्दामा ४ जस

हुँन्या काममा ५ मित्रहरूसंग प्रीति राख्दामा ६ प्यारी स्त्रीलाई गहना दिनामा ७ दाज्यू भाइहरूकन दिनामा ८ यी आठ थोक काममा खर्च भयाको दौलत वेकाममा गयाको होइन – ३ –

वृद्धावस्थाले रूपकन नाश गर्दछ १ घटिया स्त्रीले सबै सुखकन नाश गर्दछ २ दुर्जनका सेवाले आफ्ना बढाइको नाश हुन्छ ३ माग्नाले मानको नाश हुँन्छ ४ आफ्नु सह्लानी गर्नाले गुणको नाश गर्छ ५ चिन्ताले बलकन नाश गर्दछ ६ दया नराख्नाले कर्मरूपि धनको नाश हुन्छ – ४ –

अकल नभै ठाडे रहन्या मानिसको जस नाशिन्छ १ बरोबर प्रीति नराख्नाले दोस्ती नासिन्छ २ आचार नगर्न्याको कुल नाशिन्छ ३ लोभी भै धन बटोल्याको धर्म नाशिन्छ ४ मूर्ख बनिको व्यसन गर्न्याको कारणको सौख नाशिन्छ। वेकल मन्त्री तुल्याउना राजाको राज्य नासिन्छ ५ – ५ –

सुक्याको दारूवामा सहज आगो बल्दछ १ संग्राममा शोक बढ्दछ २ स्त्रीहरूमा काम बढ्दछ ३ जान्न्या मानिसमा ज्ञान बढ्दछ ४ बढिया पुरुषमा धर्म दया धैर्य बढ्दछ ५ – ६ –

घोडाको गहना वेग हो १ स्त्रीका गहना लज्जा हो २ तपस्वीका गहना दुब्लाउनु हो ३ ब्राह्मणको गहना विद्या हो ४ ऋषिका गहना क्षमा हो ५ हतियारको बलले जिउन्याहरूको गहना पराक्रम हो ६ – ७ –

नीतिका दोषहरू दुर्मन्त्री भयाकालाई लाग्छ १ कुपथ खान्या प्राणीकन रोगहरूले पीडा गर्दछ २ स्त्रीले पुरुषकन मोह गर्दछ ३ कालले सब प्राणीकन संहार गर्दछ ४ स्त्रीहरूले गर्न्याका हाउभाउ आदि चेष्टाले सबैलाई परिताप गर्दछ ५ – ८ –

वीर विक्रमसेन महाराजबाट कलिमा ठूलो नीति धर्मको प्रभृति चलाउँदा देवताहरूबाट पनि हद्द मानी आफ्ना सेवकहरूकन वानरी रूप गराई परीक्षा गर्न पठाउँदा भया र प्रश्न गर्न्याको वाटाको जवाफ पाउँदा कृतार्थ भै वानर वाननी बाट स्वरूप दर्शन दी स्वस्थानविषे जाँदाभया। फेरि यिन राजाले धेरै चरित्र विचार गर्दाको एक कथाको संक्षेप कहिन्छ।

## शिकार खेल्दा राजा विक्रमको वनमा वास

उज्जैनि नगरमा राजा विक्रमादित्य तिनका मन्त्री बुद्धिसेन एक कोही दिन शिकारमा जाँदामा दुर्गावनमा पुग्या। सैन्य एकातर्फ पर्‍या। राजा मन्त्रीमात्रै एकातर्फ परी कोही एक वृक्षमनि विश्राम गर्दा एक दिनका रात्रि राजा शयन गरी निद्रामा थिया। मन्त्री र जागृत भै बसिरह्याका थिया। यस्ता अवसरमा राजाका दश इन्द्रिय बोल्न लाग्या। मुख, कान, आँखा, गोडा, हात मनसहित जम्मा भै संवाद गर्‍या। एक जनाले भन्या कि यो पापिष्ठ विक्रम

कुन दिन मार्न पाउँला भन्या । फेरि मैले अवश्य भोजी बाघको स्वरूप भै गृास गरी मारौँला । फेरि एकले भन्या म सर्प भै रहुँला । फेरि एकले राक्षस भै रहुँला । अर्काले फेरि हात्ती भै रहुँला यस्ता प्रकारले दश इन्द्रियले दशै थोक भन्याका यस बातमा ज्ञानी मन्त्रीले सुनी याद गरिराख्याको थियो । प्रातःकाल भयापछि दुवै जना पर्वतवेगी घोडामा सवार भै राजाका एक कोही ससुराका घर जान्छु भनी गया । बाटामा मन्त्रीले युक्त गरी दश इन्द्रियका भय दन्या भेष ली रह्न्या ठाउँ ठाउँ छली लग्या । यस्ता प्रकारसँग नव इन्द्रियका रूपकन छलिसक्यापछि दशम इन्द्रिय सरोवरमा पुग्या । यस वेलामा राजाकन तृषा भै मन्त्रीकन आज्ञा गर्‍या । हे मन्त्री यो सरोवरको पानी ल्याई पिउन देऊ भन्दा मन्त्रीले जल ल्याइदिएनन् । हे महाराज यो सरोवरका जल पिउनुछैन । यसमा गृाहले भिकदछ भनी राजालाई तर्साया र राजाले मन्त्रीलाइ निन्दा गर्‍या । हे मन्त्री तिमी मन्त्रीका स्वभाव रहेनछौ । एक सरोवर देखीकन पनि डराउन्या वीरको स्वभाव रहेनछ भनी अहङ्कारले घोडा चढ़ी सरोवरमा पानी पिउन भनी गया । मन्त्रीले नजाऊ नजाऊ भनी पुकारी पछि पछि दगुर्‍या । सरोवरका किनारामा पुगी पानी पिउँला भनी विचार गरिरहँदा सरोवरबाट कल्लोल शब्द गरी गर्जमान गर्दा राजातर्फ पानीका तरङ्ग उठी आयो । यस्तो देखी मन्त्रीको वचन सत्य भनी भागी आया । यस वखतमा मन्त्रीले विन्ति गर्‍या । भो महाराज मेरा कुराको प्रतीत नगरी जाँदा यस्ता अवस्था हजुरलाई जीवको संसय हुन गयो । यस सरोवरका पानी पिउनुछन भनी आफूले सुन्याका दश इन्द्रिय स्वरूप जन्तुका भयदेखि मुक्त गरायाको सब विस्तार कही दुवै ससुराका घर बषे गया ।

## राजा विक्रमको च एक मृत्यु

उस देशका राजाले जुवाईकन अति मान्य गरी राजदरबारभित्र लगी मान्य गरी राख्या । यस दिनका रात्रि राजा रानी कोठामा शयन गरिरहँदा बुद्धिसेन मन्त्री राजाका द्वारैमा शयन गरिरह्या । रानीले मन्त्रीकन देखी रानीका परपुरुष थियो र मन्त्रीदेखि रिसाई खड्ग हातमा ली राजाका खड्गले प्रहार गरी निर्जीव गरी ढोकामा सुतिरह्याका मन्त्रीका हातमा खड्ग राखी आफू रोइरह्या । मेरा स्वामी यो चाण्डाल मन्त्रीले मार्‍यो भनी हाहाकार गरी रोइरहिन् । यहांपछि उस देशका राजाले आश्चर्य मानी मन्त्रीकन चाण्डालका हातमा सौंपी खड्ग सौंप्या । यस वेलामा मन्त्रीले अनर्थ भयो भनी दश दिग्पाल साक्षी आफ्ना स्वेष्ट देवता श्रीजगदम्बाकन स्मरण गरी हे परमेश्वरी आजका कालमा नीतिका बचन भेटाई मेरा जीवरक्षा गर्नुहोला भनी वारंवार स्मरण गर्‍या र चाण्डालले भन्या मार्नको तयारी गर्‍याको थियो ।

उस्ता वेलामा जगदम्बा प्रसन्न भै आकाशवाणी प्रसन्न भै राजाकन आज्ञा गऱ्या ।

हे राजन् तं राजा भै विवेक नगरी यस्ता मन्त्रीका प्राण लिन लाग्यस् । मन्त्रीले माऱ्याको कदाचित् होइन । तेरी छोरीले माऱ्याको हो भन्न्या आकाशवाणी हुंदा उस वाणी सुनी राजाले मन्त्रीको प्राण रक्षा गरी छोरीकन नीतिप्रमाण सासना गऱ्या । यहाँपछि मन्त्रीले विन्ति गऱ्या । भो महाराज यी महाराजको शरीर यहाँ दाह गर्नुहुँदैन वाराणसी क्षेत्रमा लगी दाह गरुँला भनी धातुका पेटारा बनाई राजाका शरीर भित्र राखी बोकी लग्या । यस्ता बखत मन्त्रीले विचार गऱ्या कि वाराणशी क्षेत्र लैजान्न । मेरी स्त्रीको चरित्र नीति विचार गरुं भनी जाई ससुराका घर पुग्न जाँदा घरका नजीक एक रूखमा पेटारा भुण्ड्याई ससुराका घरमा गया ।

## राजा विक्रमको पुनर्जीवन

उनका स्त्रीले देखी बहुतै आदर गरी भोजन गराया । त्यहाँपछि दुबै स्त्रीपुरुष कोठामा शयन गर्न आउँदा उस दिनका रात्रि उसै कोठाका भयालमनि जम्बुक आई विशब्द गरी कराया । त्यो जम्बुक करायाको सुनी मन्त्रिणीले जम्बुकका वाक्य बुझी उठ्दा मन्त्री बुद्धि-सेनले सोध्या । हे प्रिये तिमी किन उठ्यौ भनी भन्दा मन्त्रिणीले विन्ति गरिन् ।

हे प्रभु यी जम्बुकले भुण्ड्याई राख्याका धातुका पेटारामा मृतक छ । यो झिकी हामी-लाई आहारा देऊ भनी करायाको हो । फेरि यस्तो भन्याको हो । जुन मानिसले जम्बुकको भाषा बुझदछ, उसले हामीलाई आहारा नदिया महापातक लागोस् भनी जम्बुकले भन्यो अब मैले भाषा बुझ्या प्रान्त यो मृतक ली जम्बुकलाई इच्छाभोजन गराउन जान्छु भनिन् र मन्त्रीले स्त्रीका अगाडि शोक गरी बोल्या । हे प्रिये यो मृतक अरू होइन । हामीहरूका स्वामी विक्रमादित्य राजा हुँन् । स्त्रीका कारणमा यिनको प्राण हर भयो । अब मैले वाराणशी क्षेत्रमा लैजाई संस्कार गरुं भनी ली आयाँ । यहाँ आउनाले रूखमा झुण्ड्याई राख्याँ । यी राजाकन जम्बुकलाई आहारा नदेऊ । यी राजा नभयापछि म अनाथ भैगयाँ भनीकन स्त्रीकन वारंवार शोक गरी भन्दा यस्ता वचन सुनी मन्त्रिणीले विन्ति गीरिन् ।

हे प्रभो त्यस्ता तरहसँग मऱ्याका हुन् भन्न्या यी राजाकन बचाउनानिमित्त ईश्वरीका आराधना गरिहेरुं भन्दा मन्त्रीले आश्चर्य मानी विन्ति गऱ्या । हे प्रिये यस्ता तिमिले कसो गरी गरौली भनी भन्दा स्त्रीले विन्ति गरिन् । हे प्रभो मैले पूर्वकालमा पीठ सेवा गरी हिंड्दा देवीकन प्रसन्न गराई वरदान प्रसन्न भयाको छ । यसै प्रकारले यति अंकन गऱ्याको हो भन्दा मन्त्रीले उठी दुबै जना भै चाहिंदो सरजाम तयार गरी गुप्तसंग रात्रिविषे पीठमा गया ।

मन्त्रीले रूखमा भुराड्यायाको भेटारा ली गया । मन्त्रिणीले विधिपूर्वक देवीकन पूजा गरी प्रसन्न गराई राजाको जीव वरप्रसाद ली राजाका शिर जोरी बचाइदिया । देवी अन्तर्ध्यान हुंदि-भइन् । यी मन्त्रिणीको कृपाले राजा वीर विक्रमादित्य सजीव भै तेजस्वी भै मन्त्रिणीका घरमा थोरै दिन वास गरी फेरि राजा ससुराका घरमा गै मान्य ली आफ्ना देश उज्जैनि नगरविषे जाँदाभया ।

यस्ता आपदादेखि पनि बाँची उग्र र शान्ति चरित्र विचार गरी महासामर्थवान् भै हिन्दुस्थान भै हिन्दुस्थानका बड़ा बड़ा महाराजा छत्तीस जनाकन आफ्ना अघि पछि राखी युद्ध गरी जिती चक्रवर्ती महाराज भै रह्याका थिया । फेरि ईश्वरीका पारसमणिका प्रभावले अरू धनहरूले गरी हिन्दुस्थानमा विक्रम नाम सम्वत्सर फिराया । पूर्व दक्षिण पश्चिम उत्तर चारैतर्फ मुलुक बढ़ाई धेरै जग्गामा जाई फिरी चरित्र बुझी हेऱ्या । मक्वेश्वर पनि दर्शन गऱ्या । पश्चिमका मुसलमान बादशाहहरू पनि युद्धमा जिती हटाया । नानाप्रकारसंग महाचक्रवर्ती राजा भै आनन्दसित विहार गरिरह्याका थिया । केही वर्षपछि क्षान्तिशिल नाम कापालिक जोगीसँग भेट भयो । पछि उनका सम्मतले दक्षिण स्मसानमा जाई वेताल सिद्धसाद्रि साधनमा वेतालकन पच्चीसवार ल्याउंदामाको कथाको वर्णन सक्याप्रान्त सा-धनमा क्षान्तिशिलले कपट गरी राजाकन मार्न तयार हुंदा राजाले युक्ति गरी योगिनीकन मारी आफूले सिद्धि पाया । बीर विक्रमादित्य भनी बड़ो नाम प्रख्यात भै गया ।

श्रीवज्रयोगिनीका अनुग्रहले तेव्बर आयुर्दा पायाको हुनाले पैले एकवार तेल भाडामा पाक भै जीवरहित भै गया । फेरि स्त्रीका द्वाराले मरण भयाका पनि बाँची आया । फेरि वेताल साद्धा योगिनीले मार्न आँट्दा योगीलाई मारी आफू बची सिद्धि पाया ।

## राजा विक्रमको लीलावर्णन महिमा

यिन राजाको लीलावर्णन महिमा-कलिमा अति आश्चर्य दुर्लभ छ । यस्ता महाराज यस संसारमा "न भूतो न भविष्यति" धन्य भन्नु श्रीमहाराज चक्रवर्ती वीर विक्रमादित्य सेन महाप्रतापी महोप-कारी महात्यागी महाभोगी धर्मकन जान्न्या नीतिशास्त्र जान्न्या सर्व विद्या जान्न्या नाना कौतुक विहार गर्न्या गीत वाद्यादि जान्न्या अति शूरा उत्तम मति भयाका सत्यवादी सत्यमार्गी महाभक्तिमान् युक्ति जान्न्या नाना प्रकारका रत्न सुवर्णादि धन द्रव्यले पूर्ण भयाका शास्त्र जान्न्या जन्त्र मन्त्र जान्न्या साधनसिद्धि पायाका क्षमावन्त दयावन्त गुणवान् भाग्यवान् धर्म-वान् ज्ञानवान् पात्र अपात्र जान्न्या लोभ नभयाका महाविवेकी यस्ता अवतारी महापुरुषमा

दीर्घायु भयाका उनका नाम गुण वर्णनले चिरञ्जीवि जस्ता भयाका महाविवेकी यस्ता महाप- राकूमी महाराजेश्वर कलियुगका भूपहरूमध्ये संसारमा दुर्लभ कहुयाका छन् ।

वीतरागमदक्लेशकोपमात्सर्यमोहत :
रजस्तमेति दूरत्वाद्वीर इत्यभिधीयते

यस्ता यी चक्रवर्ती महाराज वीर विक्रमादित्य सेनको अन्त उद्धार भैगयाप्रान्त देवतादेखि पायाका देवदत्त नाम महाउत्तम सिंहासन आफ्ना पुत्र विक्रमकेसरी महाराजा भया उप्रान्त, त्यस सिंहासनमा बस्न सामर्थ र योग्य नदेखी उज्जयनीका राज्य भूमिमा खनी पृथ्वीतलविषे गुप्त गरिदिया । पछि यही सिंहासनमा बसुं भनी आउन्या महाराज भोजदेवले बस्न आँट्दा बत्तीसपुत्रिका भै सिंहासन स्वर्गविषे उडी गया ।

पच्चीस वेताल र बत्तीस पुत्रिका आदि कथाले गरी महाराज चक्रवर्ती वीर विक्रमादित्यको वर्णन संसारमा प्रख्यात छ । संक्षेपले गरी महाराजा चक्रवर्ती वीर विक्रमादित्यको किञ्चित् वर्णन कही सकियो ।

## राजा धर्मदेवको आकस्मिक मृत्यु

अब उप्रान्त अघि नेपालमा राज्याभिषेक दियाका राजा विश्वदेवस्य भोगवर्ष ४८ यी राजाले पनि बहुतै नीति गतिले प्रजा प्रतिपाल गरी सुखभोग गरिरह्या । यिन राजाले दरबार ६ तला विहार गरी बनाई ठूलो बगैंचा बनाया । त्यहीं स्थान आफ्ना आगम स्वेष्टदेवताकन नेम गरी श्रीदेवीका नाम राजदेवी भनी प्रख्यात गरी प्रतिवर्ष आफूले देवालि मान्दाभया । बौद्ध मार्गीहरूका पर्याग प्रजाहरूकन पनि स्थान स्थानका देव देवीकन मनाई राख्दाभया । बौद्ध मार्गीहरूका पर्याग हुनाले भिक्षुकहरूको संग हुनाले बौद्धकन पनि मानी सिम्भूका स्थान बनाइदिया । अघि वीर विक्रमादित्यले स्थिति गरी गयाका धर्मव्रतहरूको सन्मान पनि गरिरह्याका थिया । केही दिनपछि आफ्ना पुर्खाको कीर्ति धर्मागत देवका नामले बनायाका नारायण धारा बन्द भै जाँदा ती राजाले मनमा बहुतै फिका गरी मेरा पुर्खाले जलाशयन नारायणका आज्ञा पाई बसायाको स्थान हो भनी अब म पनि तिनै नारायणका स्थानमा जाई सेवा भक्ति गर्नुपर्‍यो भनी शतरुद्र पर्वतमुनिका आदि जलशयन नारायणका स्थानमा जाई सेवा भक्ति स्तुति गर्दा 'ज्योतिकहरूसित बुझी काम गर' भनी स्वप्नमा पाई ती राजाले ज्योतिक ब्राह्मण जान्न्या बोलाई सोद्धा कण्ठप्रमाण आयो र ज्योतिकहरूले बिन्ति गर्न नसकी नबोलि

रह्या । राजाले केही सन्देह मान्नुपर्दैन यथार्थ बताउनुहवस् भन्दा हे महाराज

द्वात्रिंशल्लक्षणसंयुक्तं नरबलिं दद्यात्
धाराबन्धप्रकाशो जायते राजन् इति वाक्यं श्रुतम्
इति कार्यं मया क्रियते इत्यर्थं मनसि स्थापितम्

यहाँ उप्रान्त कोही दिनपछि राजाले आफ्ना मनमा बिचार गर्‍या । प्रजाहरूमा कोही लक्षणले युक्त भयाका भया पनि विना अपराध जीवघात गर्नु मेरा कुलको धर्म होइन । मेरा पुत्र पनि लक्षणले युक्त छ तपनि मछेउ पनि युक्त छ भन्दछन् । तसर्थ आफ्ना पुर्खाको कीर्ति थाम्ननिमित्त विना अपराधि अरू मानिस खोजी जीवघात गर्नुचाहि त आफ्नै जीवघात गर्नु योग्य हो भनी ती राजाले यस्ता नराधिपति प्रभुत्व सुख र नवसागर रानी अति सुशीलाकन त्याग गरी पुत्र मानदेवकन बोलाई गुप्तभेद नबताई हे पुत्र आजका चौथो दिनमा हाम्रा धारामाथि सम्पूर्ण शरीर छोपी रात्रिमा सुतिरहन्या पुरुष एक जना होला त्यसकन तैले जाई मुख नहेरी शीघ्रले काटी आउनू । तब हाम्रा धारा बहला भनी अह्राया । चौथो दिनमा आफूले धर्मका निमित्त जाई सुतिरहन गया । त्यहाँपछि पुत्र मानदेवले पिताका आज्ञा मानी केही बिचार नगरी वेगले जाई छोपी सुतिरहन्या पुरुषकन केही नहेरी खड्गले प्रहार गरी छिन्न भिन्न गर्‍या । त्यसै वेलामा ठूलो शब्द गरी धारा बह्यो र राजपुत्र खुशी भै खड्ग धुन जाँदा दुवै धारादेखि रक्त बहाई देखाया । पितृहत्या गर्न्याको मुख हेर्नु छैन भनी हिति मंगल फर्कि-गयाको हो भनी भन्छन् अझतक छँदैछ । राजपुत्र त्यस ठाउं छाडी गयापछि निर्मल भै सदा सर्वदा जल बह्यो । राजपुत्र इक्षुमति पुग्दा सबै वीरामात्रै बगाई ल्यायाको हुनाले तुखुचा भनी भन्दछन् ।

## राजा मानदेवद्वारा खासा चैत्यको निर्माण

भोलिपल्ट नगरमा ठूलो हल्ला उठी सोहरा फिज्यो । राजाकन पनि काटी राख्या । बन्ध भयाका दुवै धारा पनि बही रह्यालन् भनी अनेक तरहका कुरा राजपुत्रले सुनी हेर्ननिमित्त गया । आफ्नै बाबा मरिरह्याको देखी बहुतै सोक गरी भ्रमण गरी मनमा विचार गर्‍या । बाबाले छलवार गरी मकन यस्तो अनर्थ गराया भनी बडो कठिनसंग चित्तकन धैर्य गरी केही कुरा प्रकाश नगरी पितृको क्रियाकर्म सम्पूर्ण गरी महतारिकन राज्यको भारी दी आफूले हत्यामोचन गर्ननिमित्त मेरा धर्मका बाज्या विक्रमादित्यबाट वर प्रसाद पायाको स्थान श्रीवज्रयोगिनी हो भनी श्रीवज्रयोगिनीका चरणमा शरण जाई हे "तारिणी" भनी हाहाकार गरी विलाप गरी श्रीदेवीकन पूजा गरिरहंदा त्यस वेलामा

देवीबाट करुणा गरी आकाशवाणी भयो हे बालक तेरा पाप मोचन गर्नानिमित्त केही कीर्त्ति बनाई तैले यहाँ देखि पश्चिम भाग एक कलिज पछि उडियाको ;हेरी जानू त्यो पछि जहाँ बस्ला । त्यहाँ तैंले बडो यन्त्राकारले सबै देवतासहित गरी चार प्रदक्षिणामा एक कोस बौद्ध मन्दिर बनाऊ भनी आज्ञा पाउँदा आज्ञाअनुसार राजपुत्रले श्रीदेवीका करुणावाणी सुनी हवस् भनी कबुल गरी देवीबाट उडाई दियाको कलिजकन हेरी पछि पछि गया । त्यो पञ्छि उडी जाँई एक स्थानमा बस्या । राजपुत्र उही स्थानमा पुगी जग्गा ठहराई मन्दिर बनाउनकन प्रारम्भ गर्‍या ।

त्यस समयमा पितृहत्याका पापले यस्तो भयो कि ती राजपुत्र बस्याका जग्गामा अनावृष्टि भै मेघ शून्य भयो र राजपुत्रले बहुतै दुःख पाई कीर्ति बनाउनालाई रात्रिका विषे धेरै कपडा फिजी शीत नित्य निचोरी ईंट पारी बाह्र वर्ष लाईकन बौद्ध मन्दिर सिद्ध गर्‍या । कस्तो मन्दिर भयो भन्या सबै देवताहरू पीठ देवीगणले संयुक्त गरी बनाई प्रतिष्ठा गरी राजपुत्र फेरि श्रीवज्रयोगिनी जाई तारणि माईका शरणमा जाई कर जोरी पुकारी रहंदा फेरि आकाशवाणी भयो । हे बालख तंदेखि अति सन्तुष्ट भयाँ । धन्य तेरा पुरुषार्थ मैले भन्या जस्तो बौद्ध मन्दिर सिद्ध गरी आइस् । अब तेरा पाप सब नष्ट भयो । अब तेरा बाज्ये विक्रमादित्यलाई दियाको द्रव्यवृक्षका धनले विक्रम सम्वत्सर नयाँ फिरोबा । नेपालमा पनि विक्रमनाम सम्वत्सर फिराऊ । सब प्रजाहरूकन अऋणी गर भन्न्या आज्ञा पाया । चक्रवर्ती महाराज वीर विक्रमादित्यबाट कलिवर्ष ३०४४ मा विक्रमनाम सम्वत्सर वर्ष १ एक गरी फिराया । उनै विक्रमका हुकूमले मानदेव नाम राजले नेपालमा फिराया । खासा चैत्य नाम बौध्द मन्दिर तयार गर्दा स्तुति गर्‍याको —नमो बुद्धाय

प्रणम्य नाथं चरणारविन्दं त्वं बुद्ध शरणं कृतनाशनाय असख्यपुष्पबुध्दार्चनाय त्वं बुद्ध स्वामी जिनपादपद्मम् धर्मम् किरन्ति अभिलाषचित्तायतीपनारी विपरीतकार्य्यम् विदेशरायेन शुभ त्रिरत्नं त्वं बुद्धस्वामीजिनपादपद्मम् रायतनाय प्रतिकारदेहं कृतविद्या तं खलु हृष्टतुष्टम् पिता मनोज्ञं परिपूर्णदेहं त्वं धर्मस्वामी जिनपादपद्मम् ।

आदि तेह्र श्लोकसम्मको स्तुति बनाई स्तुति गर्‍या । कस्ता प्रकारले भन्या मानदेव राजाबाट बुद्धका चरणमा पूजा मान्य गरी तिमी बुद्धजनकन शरण लिन्या असंख्य अपार भै रह्याका तिमीकन जान्याको थिएन । तिम्रा चरण कमलमा धर्मका स्वामी भयाका हे नाथ फूला चढ्याका म अज्ञानीकन कृपा राख । धर्म कीर्तिका लहर छाडी विपरीत गर्न्या विश्वदेव नाम बाबुको देह मेरा हातले त्याग गराया । जल कीर्तिका कारणमा यस्ता पुत्र मानदेवले पितृ हत्या भै ज्ञानीजनका सम्मतले र श्रीवज्रयोगिनीका तपले प्रत्यक्ष प्रसन्न भै १२ वर्ष लाई बनाया । भूपति भै जिउदै मर्न तुल्य भयाको मानदेव नाम म तिम्रा शरणमा पस्या भनी बहुत उप-

कारले पूजा मान्य गरी तत्व ज्ञान गुणले सेवा गरी ईश्वरीका द्वारले कोटि पाप भय रिपु नाश गर । मरी जान्याकन मुक्तिपद दी सर्वकार्य सिद्धि दी दुःखहरण गरी सुखदायक मोक्षपद दिन्या यस्ता देवताका चरणमा शरण छ । पिताकन सुखावती भुवनमा पुग्याऊ भनी मानदेव राजाले पिताकन उद्धार पितृहत्या गर्‍याको पाप नष्ट हवस् भन्या कामले धर्म चैत्य स्थापना गरी आफैले स्तोत्र स्तुति गर्‍या । खासा चैत्य भनी प्रख्यात भै गया ।

## मानदेवद्वारा मानेश्वरीको प्रतिष्ठा

फेरि धेरै स्थानमा धेरै कीर्ति बनाया । मानदेव विहार नाम गरी दर्बारैमा आफ्नै नामले आफ्ना कुलमा श्रेष्ठ देवताकन मानेश्वरी भनी प्रतिष्ठा गर्‍या । स्तोत्र पनि बनाई स्तुति गर्‍या । श्लोकः—

ॐ नमश्चण्डिकायै ॥ नाडि त्रितयरूपा च त्रिकालभेदभामिनी ।
ब्रह्माविष्णुशिवासीनां वन्दे श्रीमानेश्वरी त्वाम्
नादविन्दुकलातीतां मुण्डमालातपस्विनीं
शिवविनिर्मितां देवीं वन्दे श्रीमानेश्वरीं त्वाम्
ज्ञानातीतां ध्यानातीतां जयन्तीं त्वाम् कुलेश्वरीम्
ज्ञानरत्नगुणोपेतां वन्दे श्रीमानेश्वरीं त्वाम्
षड्वक्त्रमुण्डलाधारां पीनां नतपयोधरां
विन्दुतेजप्रभाकाशां वन्दे श्रीमानेश्वरीं त्वाम्
जवारुणां भानुवर्णां सुमुख्यां सिन्दूरवस्त्रां
श्वेतपद्मानुयुक्तां रक्तानुरागीं वरदां
सुप्रसन्नां त्रैलोक्ययुक्तां श्रीमानेश्वरीं त्वाम्
पीतातनेत्रा द्युतिहेमगौरि ब्रह्मेन्द्रविष्णुपरिचित्यरूपा
मोहान्धकारे परमं च दीपं माहात्मसोहं श्रीमानेश्वरी त्वंम्
संखासुशुक्ला श्वेतपद्मानुयुक्ता कुन्देन्दुधवला शशिचारुचूडा
शुक्लप्रकाशा तेजलक्ष्मीमुख्या वागीश्वरि त्वं श्रीमानेश्वरि त्वम
गीतापिताभ्यां गतबुद्धिभूता विभूषिता सा च विवर्द्धमाना
पूर्वपराणां परमप्रतिष्ठा संसारसारा श्रीमानेश्वरी त्वम्

प्रतिदिनसहस्रं दुःखभाराभिभूतो
दारिद्र्यलोकभागी बहुरिपुगणे पीडितो रक्ष मे त्वम्
त्वं मातापादपूजो क्षणमपि नियता धैर्यचित्तेन याति
मेर्चा विल्याप्रदाने तदपि मम शिशोः क्षम्यतां सिद्धिदेवी

मानदेव नाम राजाले राजकुलमा रह्याका परमेश्वरीकन भक्तिभाव गरी ईश्वरीकन शास्त्रोक्त अनुसार वर्णन गरो गीत स्तोत्र बनाई अघिदेखि बीरा भयाका देवीकन सतारका सार भयाका भनी आफ्ना नामले मानेश्वरी प्रख्यात गरी फेरि सुवर्णका मूर्ति बनाई प्रतिष्ठाकर्म गऱ्या ।

पूर्वदेखि गरी आयाका पापले गरी अभागी अपकीर्ति गर्न्या भै जन्मी दुःखका महा दारिद्र्यलोकमा अभागी शत्रुका भयदेखि मकन हे देवी रक्षागर, हे माता तिम्रा चरणको पूजा स्मरण कैले पनि न बिर्स्योस् तिम्रा चरणमा चित्त दृढ हवस् मैले गऱ्याका स्तोत्रने मेरा पुत्र प्रजा आदिहरूले मानश्वर्षष्ट स्तोत्र पाठ जसले गर्ला त्यसकन हे सिद्धिदेवी तिमी रक्षा गर भनी आफैले स्तोत्र बनाई पूजा मान्य गऱ्या । यस्ता प्रकारसंग बुद्ध मार्गको र शिव मार्गको दुवै प्रकारको आफ्ना स्वेष्ट देवताकन स्तोत्र बनाई बर्षप्रति श्रीमनमानेश्वर भनी देवालि वर्षप्रति मान्या ।

सिभू भगवान्कन छत्र चढाया । श्रीपशुपतिनाथकन पनि छत्र चढाया । फेरि कल्पवृक्षाकार रत्नादि सुवर्णले गरी दानदिया । विशाल नगरका प्रजाकन भोजन गराया । फेरि भूमि नापन्या मानदंड भनी बनाया । तिनका राज्यमा फेरि धेरै विघ्न हुँदा पौषका पौर्णमासीका दिन होलीजात्रा गर्दा विघ्न शान्त भैगया । फेरि राज सन्मानमा धातुका यन्त्र बनाई गाडी संस्कार गऱ्या । यस्ता प्रकारसंग धर्मवृत्त गरी प्रजा प्रतिपालन गरी राज्यभोग गरिरह्याका थिया । फेरि सम्वत्सर वेवहार चलाई सक्याको ३ तीन वर्ष पछि शान्त भैगया । राजाहरूका पुस्ता ३ जम्मा भोगवर्ष ९९ अघिका भुक्तवर्ष ३७९३ जम्मा वर्ष ३८९२.

अस्य पुत्र श्रीमहीदेव राजा भोग वर्ष ५१ यहाँ उप्रान्त अघि परापूर्वकालदेखि नेपाल भूमि मध्ये ठूलो मुख्य सहर विशालनगर थियो । पछि यस नगरलाई नेपाल तलाउ भै जाँदा डुबो बिरऱ्या फेरि त्यसै स्थानमा चन्द्रपुर भनो सहर बनिरह्यो । पछिबाट विजयपत्तन भन्या नाम रहन गयो अघि विशाल नगर बडो प्रख्यात भै रह्याको थियो पछि साऱ्है पुरानु हुंदा उजाडै गयाको थियो । यस्तै समय रुद्रमतीले विशाल नगरतिर विमुख भै बूढानीलकंठसन्धि पैरो भत्की अनेक तीर्थ इशानेश्वरीमध्ये गरी बस्दाभया ।

अस्य पुत्र श्रीराजा वसन्तदेव भोग वर्ष ४६ श्री राजा १५ वर्षका उमेरमा गद्दीमा बस्दा कलि गतवर्ष ३११८ लाग्याको थियो ।

दशवर्षसहस्राणि विष्णुनामानि गोचरे
तदर्द्ध जान्हवीतो तदर्द्ध ग्रामदेवता

हुनाले यो नेपाल भूमि देवपुरी भविष्य पुराणका श्लोकभन्दा तीन सय ३०० वर्ष अधिक संभाषण भै गयो। यीन दिनपछि देवताहरूको दर्शन स्पर्शन, संभाषण मनुष्यहरूलाई दुर्लभ भै बडो कष्टले मात्र पाइन्या भै गयो।

## सान्तश्रीभिक्षुद्वारा अनावृष्टि नहुने व्यवस्था

अस्य पुत्र श्रीराजा उदयदेव भोगवर्ष ४७ अस्य पुत्र श्रीराजा मंदेव भोगवर्ष ५३ अस्य पुत्र श्रीराजा गुणकामदेव भोग वर्ष ५० यिन राजाले राज्याभिषेक पायाउप्रान्त यौवनावस्था प्राप्त भै सुन्दरी स्त्रीहरूकन बोलाई प्रसङ्ग गरी भुलिरह्याका थिया। राज्यको संभार मन्त्रीलाई सौंपी आफूक्रीडामा भुलिरह्याका थिया र अन्याय अकीर्ति हुन गयाको थियो। धनैमात्र उपार्जन गरी नीतिको विचार गर्दै नथ्या र यिनका पालामा नीतिविघ्न भैं दुर्भिक्ष भै प्रजाले दुख पाउँदा पछिबाट राजाले अनर्थ भै गएछ भनी विचार गऱ्या। म एकलैले मात्र सुख पाई क्या गर्नु प्रजाको राज्यको प्रभु भै सबले निन्दा गरियाका भै गयाँअबमैले क्या गऱ्याँ हो धिक्कार मेरा जन्म भनी विचार गर्दा स्वयम्भूभगवान् स्थानमा एक सामर्थवान् भिक्षुकछन्। उनकाचरणमा शरण गऱ्या। उनले उपदेशमा फिक देह शून्यगरी वसुन्धरापुर,वरुणपुर वायुपुर संबरदेवताकन मानी सुवृत्ति गराउनानिमित्त नवनाग आकर्षण गरुं भनी भिक्षुकले म साधक हुँला हे राजन् तिमी उत्तरसाधक हौ भनी सम्मत गरी विधिपूर्वक नाग आवाहन गरिसक्या। एक कर्कोटक- मात्र विरूप हुनाले लज्जा मानी आयाको थिएनन् र शान्त श्रीभिक्षुकका उपदेश सब सुनिसकी मन्त्रले प्रयोग गरी एक दुर्वाकुण्ड पुष्प राजाकन सौप्या र राजाले श्यामवर्ण घोडा चढ़ी धनादहमा गया। त्यो फूल दहमा फेक्या र बाटो देखियो र त्यसै बाटो गरी जाई कर्कोटक नाग बस्याको स्थानमा पुगी निमन्त्रणा गऱ्या। शान्त श्री आचार्यले कह्याप्रमाण सब विस्तार गरी पाल्नुहवस् भनी विन्ति गर्दा पनि केही उत्तर दिएनन् र आचार्यका मन्त्रका बलले कर्कोटकका सिरको केश समाती लतारी ल्याया। वसिका- चलबाट ल्याई सिम्भूमा पुऱ्याई नागमण्डलका एक आसनमा बसाली विधिपूर्वक आवाहन पूजा मान्य गरी महा दुर्भिक्ष नहवस् भन्या कामनाले वृष्टि गर्नानिमित्त विधिभाव गरी पट्ट वस्त्र पुस्तकमा मूर्ति आदि वाचा लेखी नागराजहरूबाट सत्य प्रतिज्ञा गराई पछि पछिका कालमा अनावृष्टि हुन्या समयमा त्यही प्रतिमा खोली वाचा पढ्याप्रान्त वृष्टि हवस् भनी वाचा गराई नागपुर पृथ्वीतलविषे गुप्त गरी प्रतिष्ठा गरिदिया। नागलोकहरूकन विमर्जन गरी स्वस्थानविषे पठाया। त्यहाँपछि गुणकामदेव

राजाले शान्त श्रीभिक्षुकन पूजा मान्य गरी विदा भै राजद्वारविषे जाई राज्यकार्य प्रजाप्रतिपाल गरी शान्त श्रीआचार्यका मन्त्रका बलले राज्य सुभिक्ष भै आनन्दसित राज्यभोग गरिरहयाका थिया ।

जब गुणकामदेव वृद्धावस्थामा प्राप्त भया तब मनमा विचार गर्‍या । अब मेरा मरणकाल आइपुग्यो । पुत्रकन राज्याभिषेक दी तपोवनविषे जानुपर्‍यो भनी आफ्ना पुत्र नरेन्द्रदेवकन बोलाई राज्याभिषेक दी उपदेश शिक्षा दी बौद्धमार्गको - बोध दी गुणकामदेव विदा भै तपोवनविषे प्रवेश गरी गरी स्वयम्भू भगवान्का स्थान गरी रहन गया । केही कालपछि देहत्याग गरी उद्धार भै गया ।

## विशालनगर भस्मीभूत

यी राजा नरेन्द्रदेवले राज्याभिषेक पाया । अस्य भोग वर्ष ३४ यिन राजाले अघि बाबाले उपदेश दियामाफिक प्रजाप्रतिपाल गरिरह्याका थिया । यस्तै समय शान्तकर नाम आचार्यले मन्त्रसिद्धिका बल पाई धेरै वर्ष बौद्धमार्गको प्रशंसा बढ़ाई सिम्भू भगवान्का सेवा गरि रहयाका थिया । पछि 'शान्तपुरभित्र प्रवेश गरी ध्यानागारमा बसी त्यहीं गुप्त भै गया । राजा नरेन्द्रदेवबाट अघि बौद्धमार्गीका बुद्धि सुनी याद गरेनन् । पछि श्रीपशुपतिनाथकन अनेक रत्न विचित्र कोष बनाई चढ़ाया । फेरि त्यहीं सुनका धारा बनाई चढाया । जयवागीश्वरीमा फेरि पुरीसहित तीन प्रकार कोष १ प्रणाली १ देवपत्तन पुरी १ बनाई श्रीपशुपतिनाथकन चढ़ाया । फेरि जयवागीश्वरीकन नित्यार्चन गराया । यिन राजाका पालामा विशालनगरवासी प्रजाहरूमा द्विभाग भै एक शहर मध्यका मौलाको कारणमा विरोध भै झगडा बढ्ना कोपदेवता प्राप्त भै झगडा हुँदा साह्रै रिसारिस पर्न जाँदा परस्पर बिगारी दैवयोगले अग्निप्रवेश भै आगो लागी माथिल्ला पट्टिले तल्ला पट्टिका घरहरू जली भत्काई तमाम शहर बिग्रन गयो । एक नगरमा द्विभाग भैं आपसमा वैरभाव हुन जाँदा धेरै घरहरू भत्काई बिगार्‍या । त्यस्तै बेलामा अग्निदेवता कुपित हुँदा साह्रै बिग्रन गयो । पछि किञ्चित् कुरा परी चेत्या । परन्तु फेरि बनाउनलाई धेरै भारा हुन जाँदा धेरै मानिस ग्रामहरू बनाई बस्या । विशालनगर आपसका तकरार विग्रन गयापछि यस्तै समयमा एक चोरले ज्ञानेश्वरभित्र पारसमणि छ भनी थाहा पाई रात्रिविषे जाई शिवलिङ्गकन बञ्चराले चिर्दा चिर्दैमा पारसमणि उडिगयो । चोरले पाउन सकेन । पापकर्म गर्नु मात्र भयो । पछि त्यो पारसमणि प्रभावतीमा उडी बस्न गयाको रहेछ भनी थाहा पाई कोही ग्रामका एक क्षत्रिय पुत्रले जाई धातुले छुवाई छुवाई खोज्दा धातुका टुक्रा भन्या सुवर्ण भै गया । अनेक मिहिनत गरो खोज्दा पनि पाउन सकेन । विशालनगर उज्री गयापछि

नेपाल भूमिमा साना साना ग्रामहरूमात्रै भै गया । ठूलो शहर कहीं थिएन र राजा नरेन्द्रदेवले देवपत्तनमा जाई श्रीपशुपतिनाथकन मानी शहर बनाउनकन आरम्भ गऱ्या । वाग्णेश्वर सन्धिका राजगृहमा बसी दर्बार बढ़ाई यथाक्रमले शहर बनाई प्रजाकन वास दिया ।

अस्य पुत्र श्रीभीमदेव राजा भोगवर्ष १६ महीदेवदेखि पुस्ता आठके भोगवर्ष २९७ अधिका भुक्तवर्ष ३८९२ जम्मा वर्ष ४१८९ कलिगतवर्ष ३३४६ यस सूर्यवंशका राजा भीमदेवकन गोपालवंशी गुप्तवंशका राजाले जिती राज्य गऱ्या ।

## गरुडनारायणको 'चाँगु' नामकरण

श्रीराजा विष्णुगुप्त ४७ यी राजाले दोलागिरिमा चंगुनारायणकन देवालय बनाइदिया । सुवर्णका छाना चढ़ाई चागुग्राम बनाई लोककन वासदिया । ग्रामवासी जनहरूकन खेत समेत दी बसाया । परचक्र जय गर्ने कामनाले गरुडनारायणकन मानी चाँगु भनी प्रख्यात भया । वृष्टि कामनाले इचंगु नारायणकन मानी इचंगु नाम राखिदिया । सुवर्ण कामनाले अघिका आकारमाथि नारायणकन स्थापना गरी चयजु भनी प्रख्यात गरिदिया । सन्तान कामनाले नृसिंहनारायणसन्धि फपिङमा विष्णुमूर्ति बनाई स्थापना गरिदिया । यस्ता प्रकारसंग चारै नारायणकन थापी देवालय बनाई मान्या । न्यायनीतिले प्रजा प्रतिपाल गरी राज्यभोग गरिरह्याका थिया ।

अस्य पुत्र श्रीराजा विष्णुगुप्त भोगवर्ष ५१ यी राजाले वाग्मतीका पूर्व बाटोमा वृहत् शिलामय विष्णुमूर्ति बनाई स्थापना गऱ्या । दाहिना बाउमा ललहरि कुशहरिका मूर्ति बनाई स्थापना गऱ्या । नरसिंह स्थान शतरुद्र पर्वतहरूमध्ये आदि जलशयन नारायण अघिदेखिका मूर्तिकन मानी जग्गा सुन्दर गरी बनाया । यिन नारायण वृषदेव राजाका पालादेखि शतरुद्र पर्वत भत्की छोपिन गयाको प्रकाश भया उप्रान्त फेरि छोपिन गै अपूज्य भै रहंदा यिन राजाका पालामा उक्त स्थानमा रोप्याका बोजहरू चाँडै फल्न्या पाकन्या भै आश्चर्य हुँदा फेरि खोली हेर्दा आदिजलशयन नारायण मूर्ति प्रकाश भया । परन्तु नाकमा चोट लाग्न जाँदा अद्यापि नाकमा लाग्याको चिन्ह छँदैछ । यी गुप्त राजाहरू बडा विष्णुभक्ति हुनाले ती जलशयन नारायण मानी जग्गा सुन्दर बनाया । यहाँपछि एकादशी व्रत प्रतिदिन विष्णुमूर्ति ताम्रको र पाषाणको बनाई पूजा मान्य गरी व्रत गऱ्या । वाग्णेश्वर, ज्ञानेश्वर आदि स्थानविषे चार जलशयन नारायण मूर्ति बनाई प्रतिष्ठा गऱ्या । यस्ता प्रकारसंग विष्णुभक्त भै प्रजा प्रतिपाल गरी राज्यभोग गरिरह्याका थिया ।

## दोलखाबाट ल्याई भीमसेनलाई श्रीपशुपतिनिर प्रतिष्ठा

अस्य पुत्र श्रीराजा भूमिगुप्त भोगवर्ष ४५ यिन राजाले नेपालमा गौडाक्षर प्रवर्त गराया। धरणिवाराह विष्णुमूर्ति बनाई स्थापना गऱ्या। । यति तीन गोपालले राज्य गरी सेवा गरि–रह्याका थिया । यी तीन गोपालका जम्मा भोगवर्ष १४३ अघिका वर्ष ४१८९ जम्मा वर्ष ४३३२ कलिगत वर्ष ३४८९ यिन गुप्त राजाकन शिव देवता सूर्यवंशी राजा आई जिती राज्य गऱ्या । अस्य भोगवर्ष ४१ यिन राजाले बाणेश्वरका दर्बार छाडी देउपाटनमा नौ तला कोट गरी बनाई बस्या । देवपत्तनमा नौ तरहका टोल बनाई नौ गणेशका मूर्ति स्थापना गऱ्या । फेरि नौ तला गरी आफू बस्याका दर्बारसन्धि भैरव शिलामूर्ति शिवपुरीदेखि मगाई देशरक्षानिमित्त बसाया । फेरि अऋणिशिला नाम अघि विक्रम सम्वत् नेपालमा चलाउँदा मानदेव राजाले प्रजाहरूका ऋण सबै तिरी पत्र तौली हेर्ननिमित्त म गर्याका शिलाभैरव बनिगया र स्थापना गरी मानी राख्दाभया । देवपत्तनका दक्षिणमा ठूलो लोहचैत्य बनाया । फेरि देश लक्षण क्रम साधना गरी शतरुद्र पर्वत जाई भ्रुकुंम्स भन्याका नृत्यनाथकन ल्याई श्रीपशुपतिनाथका पश्चिम भागमा स्थापना गऱ्या । यी नृत्यनाथ बडो प्रत्यक्ष देवता हुन् ।

फेरि दोलखाका भीमसेन आवाहन गरी श्रीपशुपतिनाथका पश्चिम भागमा स्थापना गऱ्या । फेरि देवताहरू गणेश ४ भैरव ४ नृत्यनाथ ४ महादेव ४ कौमारी ४ खण्डित बौद्ध ४ खंत्र ४ गगन ४ अश्वचारी ४ चतुष्पथ भूत मूर्तिले संयुक्त गरी चतुमार्ग पूर्णक्रम गरी देश लक्षणक्रम साधन गरी नेपाल नाम गरी बसाया । फेरि यही देवपत्तनमा आवरण देवता टोलप्रति शिवमूर्ति स्थापना गऱ्या । अकाल मृत्यु हरणनिमित्त महामृत्युञ्जयेश्वर जगाया । फेरि नौ ईश्वरि पनि टोलका पृथक् पृथक् गरी जगाया । ढोका इनार धारा नृत्यनाथ डबली टोल आगन गणेश यति नौ प्रकारसँग युक्त गरी गुलनाम गरी देश अघि सुवर्णपुरी महानगर कहन्थ्या ।

## भुवनेश्वरी आदि ईश्वरीहरूको उत्पत्ति

उहाँ उप्रान्त यिन राजाले देश बसाया । फेरि धर्मदत्त राजाका पालामा देवता संतोषाई युद्ध गर्दा दन्तमा अड्क्याको भिखन लाग्याको ध्यानले गुप्त गरी अरण्यभित्र विराजमान भयाको श्रीवनकालीकन सन्तोष ध्यानले युक्त गरी अरण्यभित्र गुप्त गरी वनकाली भजी प्रकाश गऱ्या । फेरि त्यही स्थानसन्धि त्रिनेत्र गरी ठूलो काया संयुक्तले बनाई वनविनायक भनी स्थापना गऱ्या । फेरि तिनै राजा ज्ञानी हुनाले यही नगरीभित्र अघिका चैत्य मूर्तिकन काही गुप्त

गरी राख्याका समेत देश उत्तरपट्टि सारिदिया। नगरका प्रजाहरूकन खुशी गराई ठूलो नगर बढाई बसाया । फेरि प्रजाहरू मरण हुँदावेला मृतक मार्ग बनाई लैजाई बागेश्वरीका पूर्व भागमा वाग्मती तीरमा जात विशेषका सम्मान बनाई जलाउन लाया। फेरि यिनै देवो देशका पीठ हो भनी पिशाच चतुर्दशीका दिन सबै प्रजा जम्मा गरी देवीका आज्ञाअनुसार देवी वाद्य बनाई प्रतिवर्ष देश घुमाई रथयात्रा गराया । फेरि द्वादशीका दिनमा चतुर्वर्ण जम्मा गरी महिषवलि त्रयोदशी कौमारी गण भोजन चतुर्दशीका दिन देशमध्ये महादेवस्थानप्रति अखंड रात्रिभर अग्नि जगाई यात्राक्रम संयुक्त गरी देवीका रथले देश प्रदक्षिणा गराया।

फेरि नेपाली पीठ वत्सला मूल मूर्ति हो भनी जानी अंबिका स्थान पाया । ब्राह्मणका सम्मतले वैशाख शुक्ल ११ उत्तर फाल्गुनि नक्षत्र वरियान् योग वृहस्पतिवारका दिनमा पूजा नरवलि विधिपूर्वक गरी शिलाका कलशाकार बनाई भित्र यन्त्र गुप्त गरी स्थापना गरी प्रतिष्ठा गरी मूल शक्ति हुन् भनी आफूने पनि प्रजाहरूबाट पनि मान्य पूजा गराया । यस समयमा श्रीगुह्येश्वरी प्रकाश हुनुभयाकी थिइनन् । गुप्तै विराजमान थिइन्। फेरि भुवनेश्वरी, झंकेश्वरी साम्राज्य कामनाले फाल्गुण कृष्ण द्वितीया हस्त नक्षत्र वृद्धि योग, रविवारका दिन प्रतिष्ठा गरी प्रख्यात गराया । फेरि श्रीपशुपतिनाथका सेवा गरी श्रीपशुपतिनाथकन प्रसन्न गराई श्रीपशुपतिनाथकन चढ़ाई श्रीपशुपतिनाथका स्थानदेखि आफ्ना दर्बारसंम ल्याई बाँधी चार दिन राखी विसर्जन गरी वत्सला पीठमा विधिपूर्वक प्रारम्भ कर्म गर्ननिमित्त कोटेश्वरीका देवी पीठस्वरूप सबै अष्टदवसादि अघि पशुपतिनाथबाट निमन्त्रण गर्ने यात्रा गराई प्रेत चतुर्दशीका दिनमा कौमारीयुग्म आवाहन गरी देवीका स्थानमा बसाई भुवनेश्वरी, जयावगेश्वरी वत्सला आदि अनेक पीठका देवीकन अर्चन गरी आचार्यहरू अधिकारक स्थापना गरी देवीका आज्ञा क्रमश स्त्रोत्र भनी संकष्ट विधि नरवलि नर सिवा कोलाहल गरी नृदाहन देवी प्रमाण पूजा गरी मातृका क्रमले गणकन भक्षणले संतुष्ट गरी विसर्जनको वेलामा अनेक द्रव्य दक्षिणा वस्त्रादि सन्मान प्रतिवर्ष चलाया ।

फेरि क्षेत्रपालेश्वरीकन त्रिविधादि अनेक द्रव्य मगाई आचार्यहरूकन भूगोल पीठका मन्त्र जपाई नेपालरूपी देवता आवाहन गरी द्रव्यविषे एक विधिले प्रतिवर्ष देवी आदि सबै पीठकन संतोष गराया। यति कारणबाट नेपालपीठमा नाना द्रव्यवलि दानविधि प्रसन्न भै गयो। फेरि यिनै राजालाई कोही सुजनले स्वप्नतीर्थमा एक सिद्ध आई नित्य स्नान गरी जान्छन् भनी खबर सुनाया र राजा आफै जाई हेर्न जाँदा भयंकर रूप एक योगीकन देख्या र तिनकन ठूलो प्रार्थना गरी प्रसन्न गराई ल्याई तिम्रो चरणसंधिमा बसाया राजाले ती योगीकन् खुशी गराई सम्मत गराई ग्रामदेवी जयवागेश्वरीकन शान्ति गरी चित्रकार गरी अनेकविधिपूर्वक जीवनमा संकष्टमय विधिक्रम गर्दासमय सिद्धले गुप्त गरी राजाकन दुर्वासा ऋषिका अंशका हुँ भनी सुनाया । देवीकन वडो प्रबल प्रदक्ष गरी भैरव नौ लिंगका पनि चंचल मूर्ति स्थिर

गरी बसाई आदि पूजयक गज कर्णक मूर्तिसहित प्रकाश गरी बसाया । फेरि यी राजा र योगी दुवै जाई वज्रयोगिनीमा पनि यही विधि क्रमले बडो संकष्ट गरी देवीकन चित्रकार भरी जीवन्यासविधि जगाई मान्या । यति क्रम गरी योगी गोदावरी संधि जगाई लक्ष्मीनारायण शालिग्रामका प्रमाणले विष्णुनारायण नाम प्रख्यात गरी वासुदेव संकर्षण प्रद्युम्न अनिरुद्ध चारै देवताले सहित गरी सर्वौषधिपर्वत नाम विसंखुका पर्वतविषे विष्णुकन प्रख्यात गरी जगाई आफू अन्तर्ध्यान भै तपोवन विषे जाँदाभया ।

## अंशुवर्माद्वारा वटुकभैरवको स्थापना

त्यहाँ पछि राजाले यो चित्रकार बडो क्रूर कर्म हुनाले प्रतिवर्ष चलाउन त बहुतै कष्ट भो भनी द्वादश वर्ष पुग्यापछि गर्नू भनी बंदोबस्त गरी रीत चलाया । फेरि ती राजाले मेरा गुरुजीका आश्रम हो भनी तामेश्वरमा धर्मशाला बनाई महादेवकन नित्यार्चन गरी जगा पाई शिवदेव राजा सूर्यवंशमा उत्पन्न भयाका राजा बडो पुरुषार्थी हुनाले प्रजाप्रतिपाल गरी देव देवीकन सन्मान गरी नेपालमा नाना विक्रम तंन्त्रोक्त विधिक्रम गरी धेरै यश कीर्ति बढाया, यिन राजाको सन्तान थिएन र बैनीका पुत्र क्षत्रिय भानिजकन अंशुवर्मा नाम राखी राज्याभिषेक दिया आफू शान्त भै गया । यिन राजाका पालामा भोट देशबाट आई चंपादेवी नाम कहाई नेपालका राजासंग मिली बुद्धाचार्यहरूका समतले खाशा चैत्य बिहार घरभनी चारैतर्फ बनाइदिया । फेरि फुटग्राममा चैत्य थाप्या । कूर्मासन राखी फेरिचतुरंकरामायणकोनित्य लीला बनाई नचाया ।

श्री राजा अंशुवर्मा भोगवर्ष ४३ यिन राजाले वत्सलापीठमा नरवलि प्रतिवर्ष कष्टकर्म भनी देवीकन शान्ति पूजा गरी युग्म शुद्ध छाग थपी वलिदानले प्रतिवर्ष कर्म चलाया । नरसिवा कोलाहल गर्‍याको ती राजाले हेर्न जाँदा हाँसी ठट्ठा गरी बस्दामा नरसिवाले राजाकन समात्न गयो र राजा खुशी भई नरसिवाकन धेरै खेत विर्ता दिया । फेरि नेपालविषे प्राप्त भयाको पूर्वागमन दिन बिचारी वैशाख शुक्ल पूर्णिमामा ठहराई त्यस दिनमा देवी प्रसन्न निमित्त कौमारीगण बसाई अनेक यज्ञादि क्रिया गरी वलिदान पूजानिमित्त नवदुर्गा बसाई वाह्याभ्यन्तर कर्म प्रतिवर्ष चलाया । यिन राजाले देवपत्तनका दर्बारपछाडि शंखमूलका दक्षिण दिशा लगंखेल भन्या ठाउँमा सुवर्ण खण्डवन फाँडी वामनगर बनाउन आरंभ गर्‍या । बहुतै सुन्दर गरी दर्बारसमेतका सहर बनाई आफ्ना मन्त्री सर्दार दुनियाँहरूलाई पनि दर्जाअनुसारका घर बनाई सबैलाइ वास गराया । आफू पनि सोही सहरमा वास गर्‍या । बाह्र हजार १२००० का सहर बनिभयो । यी राजा बडो चंचल तेजस्वी हुनाले प्रयागसम्म गै राजा राजा संग लडाई गरी जिती प्रयागमा दुइचार २।४ मैन्हा बसी त्यहाँका भैरवला सेवा गरी प्रसन्न गराई तंत्रोक्त विधिबाट आवाहन गरी सोही विधिले जोतिषी शास्त्र विचार गरी ब्राह्मणका मुखद्वारा कलिगत वर्षमा फाल्गुण शुक्ल पंचमी ५ उत्तरभाद्र नक्षत्र ऐन्द्रयोग आ दत्य वारका दिन नेपालमा आ आफ्ना दर्बारका नजीकमा वटुक भैरव भनी नाम राखी तंत्रोक्त वेदोक्त बौद्धमतले यथाविधिले स्थापना गर्‍या ।

# अंशुवर्माको राज्यकालमा धान आदि अन्नको चलन चल्ती

यहाँ उप्रान्त सोही नगरको वरावर वृद्धि गराउँदै थिइन् । आफ्ना कोठामा राजा सुती रहंदा जमराजबाट मेरा मूर्ति बनाई प्रकाशगर भनी स्वप्न हुँदा सो स्वप्नबमोजिम जान्या २ पंडित जोतिषीहरूका संमतले शास्त्रबमोजिमका धर्मराज जटाधारी लोकेश्वरका मूर्ति बनाई गुह्येश्वरीढोकानेरा उत्तरतरफ चैत्रशुक्ल र अष्टमी तिष्य नक्षत्र आयुष्मान् योग बृहस्पतिबारका दिन प्रतिष्ठा गरी बौद्ध मतले चलाउनू भनी बंदेज बाँधिदिया । रथजात्रा पनि चलाइदिया । बटुकभैरव खुशी गर्नानिमित्त मांसाहुति यज्ञ धर्मराज भन्याका स्थितिका पूजाहारीबाट चलाउनू भन्या बाँधिदियाका अद्यापि चल्दैछन् । अघि नेपालमा खेत कमाउनु, धान रोप्नु, कोदाली लाउनु, धान काट्नु, धान झारनु, धान सुकाउनु, धान कुट्नु, धानको चिउरा बनाउनु यस्ता रीत केही चल्याको छैन । खालि फलफूल मेवाको चलन छ ।

यही राजाका पालामा दैवका अंसले बलभद्र भन्याका जन्मन आया र राजा संग बक्साई आफैले खेत कमाई दुनियादारलाई पनि यै हिसावबाट सिकाई खेत कमाउनु, बिउ राख्नु, धान रोप्नु, धान काट्नु, धान सुकाउनु, धान कुट्नु, धानको चिउरा बनाउनु इत्यादि सबै सिकाई मतिलिनगरदेखि उत्तरपट्टि आफ्ना नाउले शिलाका मूर्ति बनाई बलभद्र भनी नाउं राखी मार्ग शुक्ल पूर्णिमाका दिनमा सोही मूर्तिलाई पूजा गरी चावलका पीठोको योमधि भन्या रोटी बनाई चढाउनु भन्या रीत चलाईदिया । यहादेखि नेपालमा दुनियाँदारको पनि मार्ग शुक्ल पूर्णिमाका दिनमा योमधि भन्या रोटी बनाई पूजा गरी धानका गुठीमा राखी चार दिनपछि झिक्न्या रीत चलाया । फेरि यिनै राजाले बालखहरू जन्मदा नाल काट्नुको विधि नेपालमा चलाया ।

# नेपालमा क्रय विक्रय गर्दा तराजुको चलन चल्ती

यस्ता प्रकारसित नेपालमा व्याकरण शास्त्र पढ्न्या पढाउन्या रीत चलाया । यस्ता प्रकारसँग नाना कीर्ति स्थिति गरी प्रजा प्रतिपालन गरी आफू शान्त भै गया ।

अस्य पुत्र श्री राजा कृतवर्मा भोगवर्ष १८ यिन राजाले सुवर्णपुर मतलिनगर दुइ शहरका भोग गरी प्रजापतिपाल गरी वत्सला आदि पीठको सेवा गरी राज्य भोग गर्दै थिया । यिन राजाका पालामा मधेस गौड देश भन्याका जग्गाबाट देवपालनाम क्षत्री आइ राजाको चाकरी गरी राजा कन रिझाई महापाल भन्या नाउं राखी घर बनाई यथास्थिति गरी

बसाया । राजासँग बक्साई नेपालमा तुला जोखी कृय विकृय गर्न्या रीत चलाया । यी राजा शून्य पर्वमा गया ।

## शिखरापुर नगरको निर्माण

अस्य पुत्र भीमार्जुनदेव राजा भोगवर्ष ३७ यी राजाले पनि प्रजाप्रतिपाल गरी राज्य गरी श्रीगोपालेश्वर, श्रीदक्षिणकाली, श्रीशिखरि नारायण श्रीह्लंगु वज्रयोगिनीका सेवा गरी बस्याका थिया र केही कालपछि यिन देवनाका कृपाले स्वप्नमा दर्शन पाई यिनै स्थानमा शहर बनाई तिमीसमेत बस भनी परमेश्वरबाट अनुगृह बाणी हुंदा तिमीले धन्दा मान्नुपर्दैन दक्षिण दिशा तिरबाट लोकहरू आई बस्न्याछन् भनी परमेश्वरका वाणीबमोजिम ज्योतिषी पण्डितका संमतले शिखरापुर नाउं गरी ४८ अठ्चालीस हजारका शहर बनाई चार वर्ण छत्तीस जात बसाई ठाउं ठाउंमा देवहरू पीठहरू यथा विधिसित स्थापना गराया । भाद्रपद कृष्ण एकादशीका दिन श्रीगोपालेश्वर शिखरिनारायण श्रीदक्षिणकाली ह्लंगु वज्रयोगिनीको सेवा गरी धेरै धर्म कीर्ति गरी शान्त पर्वमा गया ।

—:※:—